**सम्माननीय सभामुख महोदय,**

१. यस वर्षको शुरुमै आएको त्रासदीपूर्ण भूकम्प र यसका श्रृंखलाले ल्याएको भौतिक, आर्थिक र मानवीय विनाशको बीचबाट माथि उठेर नयाँ अठोट, योजना र विश्वासका साथ नेपाललाई समुन्नत राष्ट्रको लहरमा उभ्याउने उत्कट नेपाली चाहनालाई सम्बोधन गर्ने दायित्व बोधका साथ आर्थिक वर्ष २०७२/७३ को बजेट प्रस्तुत गर्न उभिएको छु।

२. सर्वप्रथम विनाशकारी भूकम्पबाट जीवन गुमाउने दिदीबहिनी तथा दाजुभाइ एवं विदेशी नागरिकहरूप्रति श्रद्धा सुमन अर्पण गर्दै घाइतेहरूको शीघ्र स्वास्थ्यलाभको कामना गर्दछु। साथै, यस महाविपत्तिको सामना गर्दै यसलाई नेपालको नवनिर्माण गर्ने शक्तिमा परिणत गर्न हामी सक्षम हुनेछौं भन्ने विश्वास लिएको छु।

३. सीमित स्रोतसाधन, विकट भौगोलिक अवस्था र अत्यन्त कठिन परिस्थितिसँग जुध्दै एक महिनाभित्रै खोज, उद्धार र राहतको कार्य सम्पन्न गरियो। लाखौं भूकम्पपीडितका लागि अस्थायी बासको व्यवस्था भयो। हजारौं घाइतेहरूको स्वास्थ्य उपचार सम्पन्न गर्नु, खाद्यान्न तथा स्वच्छ खानेपानीको आपूर्ति गर्नु र सम्भावित महामारी आउन नदिनु स्वयंमा ठूलो हाँक थियो, जसलाई समग्र राष्ट्रिय र अन्तर्राष्ट्रिय प्रयासबाट सामना गर्न हामी सफल भयौं। कठिन घडीमा उच्च मनोबल र अदम्य साहसका साथ स्वतःस्फूर्त रुपमा एकताबद्ध भई सङ्कटबाट उठ्न सक्छौं भन्ने उदाहरण प्रस्तुत गर्नुभएकोमा सबै नेपाली दिदीबहिनी तथा दाजुभाइप्रति उच्च सम्मान प्रकट गर्दछु।

४. विपद्को यो घडीमा आफ्नै परिवारमा परेको पीडा समेतबाट किञ्चित विचलित नभई खोज, उद्धार तथा राहतमा अहोरात्र खट्ने सबै स्वदेशी तथा विदेशी व्यक्ति, संघसंस्था, राष्ट्रसेवक कर्मचारी, सुरक्षाकर्मी, पत्रकार एवं सहयोगमा हात बढाउने मित्रराष्ट्र एवं सहृदयी मित्रहरूप्रति हार्दिक आभार प्रकट गर्दछु।

५. भौगोलिक कठिनाइका बावजूद छोटो अवधिमा विपद्पछिको आवश्यकता पहिचान गरी प्रतिवेदन सार्वजनिक भएको छ। यो आफैंमा विश्वसनीय र अन्तराष्ट्रिय मान्यता प्राप्त प्रतिवेदन हो। विनाशकारी भूकम्प गएको ठीक दुई महिनामा आयोजना गरिएको **"नेपालको पुनर्निर्माणका लागि अन्तर्राष्ट्रिय सम्मेलन"** अभूतपूर्व रुपमा सफल भएको छ। सम्मेलनको व्यवस्थापन, सहभागिता, प्रदर्शित ऐक्यवद्धता, घोषणा गरिएको सहयोगको राशी आदि सबै पक्षबाट यो सम्मेलन उपलब्धिमूलक भएको

छ। सम्मेलनपछि नेपालको पुनर्निर्माण अभियानमा अत्यन्त ठूलो ऊर्जा र आत्मविश्वास थपिएको छ। सम्मेलनमा सहभागी भई सहयोगको प्रतिबद्धता जनाउनु हुने सबै मित्रराष्ट्रहरू र अन्तर्राष्ट्रिय संघसंस्थाप्रति हार्दिक आभार प्रकट गर्दछु।

६. प्रकृतिलाई जित्न सक्ने सामर्थ्य हामी कसैसँग छैन, न त प्राकृतिक प्रकोपलाई रोक्न सक्ने क्षमता नै छ। तर यसबाट हुने क्षतिलाई कम गर्ने र यस्ता प्राकृतिक प्रकोपसँग जुध्न सक्ने सामर्थ्य भने हामीसँग हुनैपर्दछ। यस पटक हामीले व्यहोर्नुपरेको यो अकल्पनीय कठिन अवस्थाबाट पाठ सिकेर सुन्दर भविष्यको मार्गचित्र कोर्न आवश्यक छ। यसका लागि नेपाल सरकार सधैं नेपाली जनतासँग छ र रहनेछ भन्ने विश्वास दिलाउँदै आफ्नो क्षमता र सामर्थ्यले भ्याएसम्म यस विपदबाट सम्पूर्ण नेपालीलाई मुक्त गराउन प्रयत्नशील रहने अठोट गर्दछु। कमजोर आर्थिक क्षमता भएको समयमा समेत हामीले यस्ता विपत्तिहरूको डटेर सामना गरेको इतिहास साक्षी छ। सङ्कटलाई एकताबद्ध भई सामना गर्ने यही क्षमताको उपयोग गरी आम नागरिकको मानसपटलबाट भूकम्पको मनोसामाजिक त्रासलाई हटाउँदै मर्यादित जीवन र सुरक्षित भविष्य निर्माणमा लागिरहने विश्वास दिलाउँदछु।

**सम्माननीय सभामुख महोदय,**

७. भूकम्पले अर्थतन्त्रमा पारेको नकारात्मक प्रभावलाई कम गर्दै अर्थतन्त्रलाई पुनः गतिशील बनाउने जिम्मेवारी यतिखेर हाम्रो काँधमा आएको छ। तसर्थ, पुनर्निर्माण कार्यलाई नवनिर्माणको अवसरको रुपमा उपयोग गर्ने सोचकासाथ यो बजेटमा मैले राहत, पुनर्स्थापना र पुनर्निर्माणका कार्यहरूलाई पहिलो प्राथमिकतामा राखेको छु। विगतदेखि कार्यान्वयनमा रहेका तथा आवश्यक प्रक्रिया पूरा गरी अघि बढेका महत्वपूर्ण र बढी प्रतिफल दिने आयोजना तथा कार्यक्रमहरूलाई आगामी आर्थिक वर्षमा निरन्तरता दिएको छु।

८. आगामी आर्थिक वर्षको बजेट तयार गर्दा व्यवस्थापिका-संसदले पारित गरेको सङ्कल्प प्रस्ताव तथा विनियोजन विधेयकका सिद्धान्त र प्राथमिकताको छलफलका क्रममा माननीय सभासद्हरूले प्रस्तुत गर्नुभएका विचारहरूलाई मार्गदर्शनको रुपमा लिएको छु। नेपालको अन्तरिम संविधान, तेह्रौं योजना र वर्तमान सरकारको नीति तथा कार्यक्रमलाई बजेट तर्जुमाको आधार बनाएको छु।

९. चालु आर्थिक वर्ष २०७१/७२ को समग्र आर्थिक स्थितिको विश्लेषण गरिएको आर्थिक सर्वेक्षण र मन्त्रालय/निकायगत वार्षिक प्रगति स्थिति तथा आर्थिक वर्ष

२०७०/७१ को सार्वजनिक संस्थानहरूको स्थिति समीक्षा यस अघि नै यस सम्मानित सदनमा प्रस्तुत गरिसकेको छु। आगामी आर्थिक वर्षको बजेटका चुनौती, प्राथमिकता र कार्यक्रमहरू प्रस्तुत गर्नु अघि अब म वर्तमान आर्थिक स्थितिको संक्षिप्त विवरण प्रस्तुत गर्दछु।

**आर्थिक परिसूचकहरू**

१०. विगत केही वर्षदेखि कमजोर रहेको आर्थिक वृद्धि लगातार दोस्रो वर्ष पनि पाँच प्रतिशतभन्दा माथि रही अर्थतन्त्रले क्रमशः सकारात्मक गति लिने अपेक्षा गरिएको थियो। तर, खाद्यान्न उत्पादन र भूकम्पपछिको तीन महिनामा आर्थिक क्रियाकलापमा आएको कमीका साथै उद्योग र सेवा क्षेत्रमा परेको प्रतिकूल प्रभावका कारण चालु आर्थिक वर्षको वृद्धिदर ३.०४ प्रतिशतमा सीमित रहने अनुमान छ। भूकम्पले पुऱ्याएको क्षतिको अनुमानित मौद्रिक मूल्य कुल गार्हस्थ उत्पादनको झण्डै एक तिहाई छ।

११. भूकम्पका कारण अन्य आर्थिक परिसूचकहरूमा पनि नकारात्मक असर परेको छ। चालु आर्थिक वर्षको प्रथम ९ महिनासम्म ७ प्रतिशतभन्दा कम रहेको मुद्रास्फीति भूकम्पपश्चात् आपूर्ति प्रणालीमा परेको प्रतिकूल असर र उत्पादन लागतमा भएको वृद्धिका कारण केही बढ्न गई एघार महिनासम्ममा ७.४ प्रतिशत पुगेको छ।

१२. चालु आर्थिक वर्षमा रू. ६ खर्ब १८ अर्ब १० करोड विनियोजन गरिएकोमा रू. ५ खर्ब २२ अर्ब ६८ करोड अर्थात् ८५ प्रतिशत मात्र खर्च हुने संशोधित अनुमान छ। जसमध्ये चालुतर्फ रू. ३ खर्ब ३९ अर्ब २४ करोड, पूँजीगततर्फ रू. ८६ अर्ब ५८ करोड र वित्तीय व्यवस्थातर्फ रू. ९६ अर्ब ८६ करोड खर्च हुने संशोधित अनुमान छ।

१३. कुल रू. ४ खर्ब २२ अर्ब ९० करोड राजस्व सङ्कलन गर्ने लक्ष्य राखिएकोमा लक्ष्यको ९३ प्रतिशत अर्थात् रू. ३ खर्ब९३ अर्ब ५० करोड सङ्कलन हुने संशोधित अनुमान छ। अनुदानतर्फ रू. ७३ अर्ब ३८ करोड र ऋणतर्फ रू. ४९ अर्ब ७३ करोड गरी रू. १ खर्ब २३ अर्ब ११ करोड वैदेशिक सहायता प्राप्त हुने अनुमान गरिएकोमा अनुदानतर्फ रू. ३७ अर्ब ७३ करोड र ऋणतर्फ रू. २५ अर्ब ४८ करोड प्राप्त हुने संशोधित अनुमान छ।

१४. चालु आर्थिक वर्षको पहिलो ११ महिनामा अन्तर्राष्ट्रिय व्यापार घाटा रू. ६ खर्ब १२ अर्ब ८७ करोड पुगेको छ। निर्यात व्यापारमा आएको गिरावट र आयातमा

भएको अत्यधिक वृद्धिले व्यापार घाटामा उच्च वृद्धि देखिएको छ। व्यापार घाटामा वृद्धि भएता पनि विप्रेषण आप्रवाह र वैदेशिक सहायता परिचालनमा भएको वृद्धिले चालु आर्थिक वर्षमा शोधनान्तर स्थिति अनुकूल नै रहनेछ। पहिलो ११ महिनासम्ममा रू. १ खर्ब २७ अर्ब २० करोड बराबरको शोधनान्तर बचतमा रहेको छ।

१५. चालु आर्थिक वर्षको ११ महिनासम्ममा रू. ८ खर्ब ९ अर्ब ४८ करोड बराबरको विदेशी विनिमय सञ्चितिमा रहेको छ। वस्तु र सेवाको वर्तमान आयातको स्तरका आधारमा यो सञ्चिति १३.१ महिनाको वस्तु र ११.३ महिनाको वस्तु तथा सेवाको आयात धान्न पर्याप्त हुनेछ। लगानीको वातावरणमा सुधार भएको छ। पूँजी बजारको द्योतकको रुपमा रहेको नेप्से सूचकाङ्क भूकम्पपछिको अवस्थामा पनि ९०० भन्दा माथि नै रहेको छ।

**सम्माननीय सभामुख महोदय,**

१६. लामो समयको राजनीतिक द्वन्द्व र अस्थिरता एवं प्रत्येक वर्ष आइलागेका ठूला प्राकृतिक प्रकोपका बीच पनि विगतमा कार्यान्वयन भएका कतिपय नीति तथा कार्यक्रमहरूको परिणामस्वरुप आर्थिक-सामाजिक परिसूचकहरूमा केही महत्वपूर्ण प्रगति भएको तथ्य हाम्रा सामु छ।

१७. खर्च व्यवस्थापनका लागि आन्तरिक स्रोत परिचालनमा हामी सफल छौं। राजस्वको कुल गार्हस्थ उत्पादनसँगको अनुपात अधिक हुने थोरै मुलुकको सूचीमा नेपाल पर्दछ। २५ वर्षअघि यो अनुपात १०.४ प्रतिशत रहेकोमा चालु आर्थिक वर्षमा लक्ष्यभन्दा कम राजस्व सङ्कलन हुँदा पनि १८ प्रतिशतभन्दा माथि रहने देखिएको छ। राजस्वको बनावटमा पनि महत्वपूर्ण परिवर्तन भएका छन्। कुल राजस्वमा प्रत्यक्ष करको हिस्सा बढ्दै गएको छ। केही वर्ष अघिसम्म राजस्वको प्रमुख स्रोत भन्सार महसुल हुने गरेकोमा हाल यो तेस्रो स्थानमा झरेको छ।

१८. सार्वजनिक खर्च व्यवस्थापनमा सुधार हुँदै गएको छ। यसै वर्ष सम्पन्न भएको सार्वजनिक खर्च तथा वित्तीय उत्तरदायित्व सम्बन्धी अन्तर्राष्ट्रिय मूल्याङ्कनमा नेपालको स्तर सन् २००८ को तुलनामा राम्रो देखिएको छ।

१९. सामाजिक परिसूचकहरूमा सुधार भएको छ। भूकम्पले गरिबीको दर केही बढाए पनि एक चौथाई भन्दा कम जनसंख्या मात्र गरिबीको रेखामुनि रहेको छ। बाल मृत्युदर र मातृ मृत्युदरमा कमी आउनुका साथै विगत २५ वर्षमा नेपालीको औसत

आयु १६ वर्षले बढेको छ। सबैजसो सहस्राब्दी विकास लक्ष्यहरू हासिल भएका छन्। यी उपलब्धिहरूका लागि हामीले अन्तर्राष्ट्रिय जगतबाट प्रशंसा समेत पाएका छौं। अर्थतन्त्रमा गैर कृषि क्षेत्रको हिस्सा वृद्धि भई संरचनात्मक सुधार आएको छ।

२०. यी सकारात्मक उपलब्धि र आशाका बावजूद नेपालको अर्थतन्त्रमा अझै पनि जटिल चुनौतीहरू रहेको कुरा हामीलाई जानकारी नै छ। विगत दशकको औसत आर्थिक वृद्धिदर केवल ४.१ प्रतिशत रहेको सन्दर्भमा नेपाललाई सन् २०२२ सम्म विकासशील मुलुकहरूको स्तरमा पुऱ्याउन र सन् २०३० सम्म मध्यमस्तरीय आय गर्ने मुलुकको दाँजोमा पुऱ्याउन वार्षिक ८ प्रतिशतभन्दा माथिको आर्थिक वृद्धिदर हासिल गर्न लगानी वृद्धि गर्ने गम्भीर चुनौती एकातिर छ भने अर्कातिर प्राकृतिक विपद्पछि झन् व्यवस्थित र समृद्ध बनेका अन्य मुलुकका अनुभवबाट समेत पाठ सिकेर भूकम्पले क्षतिग्रस्त गाउँ, सहर, बस्ती, प्राचीन धरोहर एवं पूर्वाधारका संरचनाहरू निश्चित समयावधि भित्रै पुनर्निर्माण गरिसक्नुपर्ने चुनौती रहेको छ। नेपालको अर्थतन्त्रका वर्तमान चुनौतीहरूलाई बुँदागत रुपमा यसप्रकार प्रस्तुत गरेको छुः-

<u>चुनौतीहरू</u>

(क) भूकम्प र अन्य प्राकृतिक प्रकोपका कारण गरिबीको चपेटामा परेका र गरिबीको रेखाभन्दा ठीक माथि रहेका जनसंख्याको आयस्तरमा कमी आउन नदिन रोजगारी र आय आर्जनका अवसरहरू सिर्जना गर्नु,

(ख) कमजोर पूर्वाधार, भूकम्पपश्चात् लगानी, व्यापार, व्यवसाय, आय तथा रोजगारी, उत्पादन, उत्पादकत्व, उपभोग र उद्यमशीलता जस्ता अर्थतन्त्रका प्रमुख पक्षहरूमा आएको शिथिलतामा सुधार ल्याई अनुकूल नीतिको कार्यान्वयनबाट अर्थतन्त्रलाई द्रुतगतिमा चलायमान बनाउनु,

(ग) उपभोग्य एवं अनुत्पादनशील क्षेत्रमा जाने सार्वजनिक खर्चको ठूलो हिस्सालाई उत्पादनशील र पूँजी निर्माणको क्षेत्रमा परिचालन गर्नु,

(घ) बजेटको आकार र निजी क्षेत्रको लगानीमा हुने वृद्धिका कारण मुद्राप्रदायमा हुने वृद्धि र उत्पादन लागतमा हुनसक्ने वृद्धिले मूल्यवृद्धिमा पार्ने चाप कम गर्न आपूर्ति प्रणालीलाई चुस्त र सहज बनाउँदै प्रशासनिक संयन्त्रको प्रभावकारी परिचालन गर्नु,

(ङ) बजेटको आकार एवं विकास आयोजना तथा कार्यक्रमहरूको संख्यामा भएको वृद्धिसँगै सरकारी संयन्त्रको खर्च गर्ने क्षमता र निजी क्षेत्रका निर्माण व्यवसायीको कार्यक्षमता वृद्धि गर्नु,

(च) जग्गाप्राप्तिमा अवरोध, निर्माण सामाग्रीको आपूर्तिको समस्या, वातावरणीय प्रभाव मूल्याङ्कन र रुख कटानको स्वीकृतिमा ढिलाइ एवं आयोजनास्थलमा स्थानीय तहबाट हुने अवरोध जस्ता विकास आयोजनाको कार्यान्वयनमा देखिएका समस्याको सम्बोधन गर्न विद्यमान कानुनी संरचनाहरूमा व्यापक सुधार गर्दै अन्तर निकायगत र अन्तर तहगत समन्वय कायम गर्नु,

(छ) कमजोर कार्यसम्पादनस्तर, अस्वस्थ वित्तीय अवस्था र कमजोर वितरण प्रणाली भएका एवं सरकारले सञ्चालन गर्न आवश्यक नभएका सार्वजनिक संस्थानहरूको बारेमा तत्कालै गहन विश्लेषण गरी तिनको व्यवस्थापन र सञ्चालन विधि निक्यौंल गर्नु,

(ज) वित्तीय क्षेत्रका नियामक निकायहरूको दक्षता र क्षमता वृद्धि गरी वित्तीय स्वस्थता र स्थायित्व कायम गर्दै यस क्षेत्रमा गुणात्मक सुधार गर्नु,

(झ) कृषिजन्य वस्तुको आयातमा भएको वृद्धि, आयातमुखी अर्थतन्त्रको संरचना र भूकम्पपछिको पुनर्निर्माणका लागि आवश्यक निर्माण सामाग्रीको आयातमा भएको वृद्धिले हुन गएको उच्च व्यापार घाटालाई कम गर्न कृषिजन्य उत्पादन वृद्धि र सेवा क्षेत्रको पुनरुत्थान गर्नु, र

(ञ) राज्य संरचनाको तल्लो तहमा लोकतन्त्रलाई संस्थागत गर्न, सरकारले घोषणा गरेका नीति तथा कार्यक्रमहरूको अपनत्व सहितको कार्यान्वयन गर्न तथा स्थानीय स्तरमा सरकारको उपस्थिति र विपद् व्यवस्थापनलाई प्रभावकारी बनाउन स्थानीय सरकारको रिक्तता नहुने राजनैतिक पद्धतिको निर्माण गर्नु।

**सम्माननीय सभामुख महोदय,**

२१. यी चुनौतीहरूका बीच मैले आगामी आर्थिक वर्ष २०७२/७३ को बजेट निर्माण गरेको छु। समृद्ध नेपालको तस्वीर अगाडि राखेर मैले बजेटका उद्देश्यहरूलाई यसप्रकार प्रस्तुत गरेको छुः-

(क) आर्थिक सुधारका कार्यक्रमहरूको निरन्तरता, लगानीमैत्री वातावरण निर्माण, तल्लो तहसम्म आर्थिक क्रियाकलापहरूको विस्तार, स्थानीय उत्पादन र

रोजगारी वृद्धिका माध्यमबाट समग्र अर्थतन्त्रलाई पुनर्जीवन प्रदान गरी उच्च आर्थिक वृद्धि हासिल गर्ने।

(ख) भूकम्पको प्रभावबाट आइपरेको तात्कालिक आर्थिक शिथिलताबाट विचलित नभई विपद्सँग जुध्न सक्ने क्षमता वृद्धिका साथै राष्ट्रिय स्रोत र साधनलाई पुनर्स्थापना र पुनर्निर्माण केन्द्रित गरी नागरिकको राज्यप्रतिको विश्वास अभिवृद्धि गर्ने।

(ग) आमजनताको जीवनस्तरमा गुणात्मक सुधार ल्याउनुका साथै द्रुत आर्थिक विकासका लागि आवश्यक पर्ने शिक्षा र स्वास्थ्य जस्ता सामाजिक क्षेत्रका सेवाहरूको गुणस्तरमा सुधार गर्दै भौतिक पूर्वाधारको निर्माण कार्यलाई राष्ट्रिय अभियानको रुपमा लैजाने।

(घ) सरकारी संयन्त्रको क्षमता अभिवृद्धि गर्दै बजेटको कार्यान्वयन र सेवा प्रवाहलाई प्रभावकारी बनाउन शासकीय सुधार गर्ने।

(ङ) सामाजिक सुरक्षाको सुनिश्चितता गर्दै सन्तुलित विकास र गरिबी घटाउने।

२२. अब म यो बजेट मार्फत् देश विकास, समग्र आर्थिक-सामाजिक सुधार र सरकारी कार्यक्रमहरूप्रति आम नागरिकको अपनत्व वृद्धि गर्न केही प्रतिबद्धताहरू प्रस्तुत गर्दछु:-

(क) भूकम्पपछिको नवनिर्माण कार्यलाई व्यापक बनाई लगानी वृद्धि, रोजगारी सिर्जना, उद्यमशीलता विकास र आय आर्जनको माध्यमबाट दीगो र उच्चदरको आर्थिक वृद्धि हासिल गरिनेछ।

(ख) विपद्को समयमा स्वतःस्फूर्त रुपमा देखिएको सामाजिक सद्भाव र सहयोगमा अगाडि बढेका हातहरूलाई पुनर्निर्माणमा पनि उपयोग गर्न प्रोत्साहित गरिनेछ।

(ग) प्राकृतिक प्रकोपबाट हुने क्षति न्यून गर्न प्राथमिकताका साथ पूर्व तयारी र विपद् व्यवस्थापनका लागि आवश्यक सबै उपाय अवलम्बन गरिनेछ।

(घ) आन्तरिक स्रोतहरूको अधिकतम परिचालन गरिनेछ। साविकका राष्ट्रिय महत्वका योजना तथा कार्यक्रमलाई निरन्तरता दिंदै भूकम्पीय प्रभाव कम भएका क्षेत्रहरूका लागि आवश्यक बजेटमा कमी हुन दिइने छैन।

(ङ) निर्माणसँग सम्बन्धित सबैलाई जिम्मेवार बनाई निर्माणाधीन ठूला पूर्वाधारका आयोजनाहरू निर्धारित समयमै सम्पन्न गरिनेछ। राजधानी लगायतका स्थानहरू जोड्ने वैकल्पिक मार्गहरू निर्माण गरिनेछ।

(च) भूकम्पपश्चात् सार्वजनिक निर्माणको गुणस्तर र संरक्षण कार्य कमजोर देखिएको सन्दर्भमा आगामी दिनमा सार्वजनिक निर्माणको गुणस्तर उच्च राख्न सम्बद्ध निकाय, पदाधिकारी र निर्माण व्यवसायीलाई जिम्मेवार र जवाफदेही बनाउने उपायहरू अवलम्बन गरिनेछ।

(छ) अव्यवस्थित सहरीकरणलाई नियन्त्रित गरी भवन संहिता र निर्माण संहितालाई कडाइका साथ पालना गराइनेछ। भूकम्पको कारण कमजोर भएको भू-बनोटमा पुनः बस्ती बसाउन नसकिने देखिएका स्थानबाट बस्ती स्थानान्तरण गरी एकीकृत र व्यवस्थित बसोबास गराइनेछ।

(ज) पुनर्निर्माण प्राधिकरणको छाताभित्र पुनर्निर्माणको कार्ययोजना अगाडि बढाइनेछ। पुनर्स्थापना र पुनर्निर्माणमा स्थानीय स्रोत साधन, श्रम र प्रविधिको उपयोगलाई प्राथमिकता दिइनेछ।

(झ) मौलिक संस्कृति बोकेका एवं पर्यटकीय आकर्षणको केन्द्रबिन्दु र परम्परागत बसोबास रहेका ऐतिहासिक बस्तीहरूलाई समुदायको पहलमा मौलिक स्वरुपमा पुनर्निर्माण गरिनेछ। नेपाली पर्यटनको वैशिष्ट्यलाई पुनर्जीवित गर्दै नेपाललाई पुनः विश्वको आकर्षक गन्तव्य बनाउन कुनै कसर बाँकी राखिने छैन।

(ञ) सार्वजनिक प्रशासनको व्यावसायिक सीप, प्राविधिक क्षमता र तत्परतामा बढोत्तरी गरी समग्र सार्वजनिक प्रशासनलाई थप जिम्मेवार र जवाफदेही बनाउन विद्यमान आचारसंहिता र कानुनको कार्यान्वयनमा जोड दिइनेछ।

(ट) खर्चको पारदर्शिता तथा वित्तीय उत्तरदायित्व, लेखापालन, खर्चको प्रतिवेदन, आन्तरिक नियन्त्रण, अनुगमन र लेखापरीक्षणलाई प्रभावकारी बनाई खर्चको उत्पादकत्व बढाइनेछ। सार्वजनिक खर्च व्यवस्थापनमा सुधार गरी मितव्ययी र प्रभावकारी तुल्याइनेछ।

(ठ) आगामी तीन वर्षभित्र सबै गाउँ विकास समितिहरूमा विद्युत र सडक पुऱ्याउने, सबै सरकारी सेवाहरूको उपलब्धता सरल र सहज गराउने, सबै जनसंख्यालाई

खानेपानी तथा आधारभूत सरसफाइ सुविधा उपलब्ध गराउने र सबै निर्वाचन क्षेत्रमा बाह्रै महिना सवारी चल्ने सडक निर्माण गरिसक्ने लक्ष्यका साथ कार्यक्रमहरू अगाडि बढाइनेछ।

२३. अब म आगामी आर्थिक वर्षमा सञ्चालन गरिने कार्यक्रमहरूको विस्तृत खाका प्रस्तुत गर्दछु:-

**संविधान निर्माण, जनप्रतिनिधिमूलक शासन प्रणाली र कानुनी राज्य**

२४. संघीय लोकतान्त्रिक गणतन्त्र नेपालको संविधानको मस्यौदा संविधानसभाले स्वीकृत गरी सुझावका लागि नेपाली जनतासमक्ष लैजाने प्रक्रिया शुरु भइसकेको छ। आगामी आर्थिक वर्षको शुरुमै संविधान जारी गर्न आवश्यक स्रोतको व्यवस्था गरेको छु।

२५. न्यायपालिकाको तेस्रो रणनीतिक कार्ययोजना कार्यान्वयनका लागि आवश्यक स्रोतको व्यवस्था गरेको छु। शान्ति प्रक्रियासँग जोडिएका दुई महत्वपूर्ण आयोगहरूको कार्यलाई सहजिकरण गर्न रकम विनियोजन गरेको छु। यसैगरी सबै संवैधानिक निकायहरूको सुदृढिकरणका लागि आवश्यक बजेट छुट्याएको छु। संविधान निर्माण भइसकेपछि गरिने स्थानीय निकायको निर्वाचनका लागि रकम विनियोजन गरेको छु।

**आर्थिक सुधारका कार्यक्रमहरूको निरन्तरता**

२६. चालु वर्ष घोषणा गरिएका आर्थिक सुधारका कार्यक्रमहरूलाई आगामी वर्षमा पनि निरन्तरता दिएको छु। समग्र आर्थिक-सामाजिक विकासका लागि सार्वजनिक र निजी लगानीका लागि कानुनी र नीतिगत सुधारलाई निरन्तरता दिंदै तयार भइसकेका विधेयकहरूलाई व्यवस्थापिका-संसदबाट पारित गरिनेछ। नवीन विचारमा आधारित आविष्कार, उद्यम र प्रविधिका लागि घोषणा गरिएको Start Up Fund लाई **"च्यालेञ्ज फण्ड"** को रुपमा आगामी आर्थिक वर्षदेखि कार्यान्वयनमा ल्याइनेछ।

२७. आर्थिक सुधारका माध्यमबाट अर्थतन्त्रलाई गतिशीलता दिन चालु आर्थिक वर्षमा घोषणा गरिएका प्रोत्साहन र सुविधाहरूलाई निरन्तरता दिएको छु।

**भूकम्पछिको पुनर्स्थापना तथा पुनर्निर्माण: नवनेपाल निर्माणको अभियान**

२८. आगामी पाँच वर्षभित्र पुनर्निर्माण कार्य सम्पन्न गर्ने दृढ अठोटका साथ सरकार अघि बढिरहेको छ। पुनर्निर्माणको कार्य सरकारको एकल प्रयासले मात्र सम्भव नहुने

भएकाले सरकारले तोकेको नीतिगत मार्गदर्शन भित्र रही निजी क्षेत्र, सहकारी संस्था, गैरसरकारी संस्था, नागरिक समाज, अन्तर्राष्ट्रिय जगत र आम जनसमुदायलाई यस अभियानमा उदार मनले सरिक हुन आह्वान गर्दछु।

२९. विशेष अधिकार सहितको उच्चतम नेतृत्व, सुनिश्चित आर्थिक स्रोत, निर्दिष्ट कार्यक्षेत्र, नागरिक पृष्ठपोषणको व्यवस्था, चुस्त व्यावसायिक संरचनाको रुपमा स्थापित पुनर्निर्माण प्राधिकरणलाई छिट्टै पूर्णता दिइनेछ। यसबाट जनताको चाहना बमोजिम पुनर्निर्माण र पुनर्स्थापनाको कार्य पूरा हुने विश्वास लिएको छु।

३०. राष्ट्रिय योजना आयोगले गरेको विपद्पछिको आवश्यकता पहिचान अध्ययनको आधारमा पुनर्निर्माणको पहिलो चरणको लागत करिब रू. ६ खर्ब ६७ अर्ब हुने देखिएको छ। पुनर्निर्माणका कार्यहरूलाई द्रुत गतिमा अगाडि बढाउन यस्तो खर्च **"राष्ट्रिय पुनर्निर्माण कोष"** बाट व्यवस्थापन गरिनेछ। यस कोष अन्तरगत आन्तरिक र बाह्य स्रोतबाट सञ्चालित हुने परियोजना र नगदका साथै पुनर्निर्माण कार्यमा आम नागरिकको सहभागिता र अपनत्व बढाउन पुनर्निर्माण ऋणपत्र जारी गरी सङ्कलित रकम जम्मा गरिनेछ। आर्थिक वर्षको मध्यमा प्राप्त हुने रकम समेत यसैमा जम्मा हुने व्यवस्था मिलाएको छु। आगामी आर्थिक वर्षका लागि यस कोषमा रू. ७४ अर्ब विनियोजन गरेको छु। यसमध्ये आवासका लागि रू. ५० अर्ब, सार्वजनिक भवनका लागि रू. ३ अर्ब, पुरातात्विक संरचनाका लागि रू. २ अर्ब, अन्य भौतिक पूर्वाधारका लागि रू. ७ अर्ब, उत्पादन क्षेत्रका लागि रू. ६ अर्ब र सामाजिक क्षेत्रका लागि रू. ६ अर्ब खर्च गरिनेछ।

३१. पुनर्निर्माण प्राधिकरणले काम शुरु नगरेसम्म व्यक्तिगत घर, सरकारी भवन, विद्यालय तथा स्वास्थ्य संस्था, पुरातात्विक र सांस्कृतिक सम्पदा एवं भौतिक पूर्वाधारको पुनर्स्थापना र पुनर्निर्माणको कार्य विषयगत मन्त्रालय र निकायहरूबाट हुने व्यवस्था मिलाएको छु। राष्ट्रिय पुनर्निर्माण कोषबाट हुने खर्च बाहेक यसका लागि रू. १७ अर्ब विनियोजन गरेको छु।

३२. भूकम्पबाट पूर्ण रुपमा क्षति भएका घर निश्चित मापदण्डको आधारमा आफैंले निर्माण गर्न चाहनेहरूका लागि स्वीकृत कार्यविधिको आधारमा रू. २ लाख सम्मको सहायता सहज रुपमा उपलब्ध गराउने व्यवस्था गरेको छु। यस्तै, क्षतिग्रस्त घर पुनर्निर्माण गर्न चाहने पीडित परिवारले बैङ्क तथा वित्तीय संस्थाबाट ऋण लिन चाहेमा सरल प्रक्रिया अपनाई नेपाल राष्ट्र बैङ्कले तर्जुमा गरेको कार्यविधिको आधारमा २ प्रतिशतको

सहुलियत ब्याजदरमा काठमाडौं उपत्यका भित्र २५ लाख रुपैयाँसम्म र उपत्यका बाहिर १५ लाख रुपैयाँसम्म भूकम्प पीडित विशेष आवास कर्जाको व्यवस्था यस अघि नै गरिसकिएको छ।

३३. भूकम्पबाट असर परेको आवासीय घर, कृषि, व्यवसाय तथा पर्यटन लगायतका क्षेत्रलाई पुनर्कर्जा उपलब्ध गराउन तथा ब्याज सहुलियत प्रदान गर्न नेपाल राष्ट्र बैङ्क अन्तरगत आर्थिक पुनरुद्धार कोष स्थापना गरिनेछ। भूकम्प प्रभावितहरूका लागि कर्जा नोक्सानी व्यवस्था, कर्जाको पुनर्तालिकीकरण, आम्दानी खर्च लेखाङ्कनको समयावधि थप र पूँजी गणनाका सम्बन्धमा गरिएको घोषणालाई निरन्तरता दिइनेछ।

३४. भूकम्प प्रभावित क्षेत्रहरूमा खानेपानीका मुहानहरूमा परेको असरलाई सम्बोधन गरी खानेपानी तथा सरसफाइका क्षतिग्रस्त संरचनाहरू तत्काल पुनर्निर्माण र पुनर्स्थापना गर्न आवश्यक बजेट विनियोजन गरेको छु। भूकम्प अति प्रभावित जिल्लाहरूमा पुनर्निर्माण, पुनर्स्थापना वा नयाँ निर्माण गर्नुपर्ने खानेपानी तथा सरसफाइ आयोजनाहरूमा स्थानीय उपभोक्ताको योगदान बापत व्यहोर्नु पर्ने लागतको ३० प्रतिशत खर्च सरकारले व्यहोर्ने व्यवस्था मिलाएको छु।

३५. क्षतिग्रस्त संरचनाहरूको पुनर्निर्माणका लागि सीप विकास तालीम केन्द्रहरूबाट आधारभूत विषयमा जिल्ला तहमा नै ५० हजार युवालाई लागि सिकर्मी, डकर्मी, लगायत धारा तथा बिजुली सम्बन्धी तालीम प्रदान गरिनेछ। यस्तो सीप तथा ज्ञानको प्रमाणिकरण गरिनेछ। गैरसरकारी संस्थाहरूले सञ्चालन गर्ने यस्ता कार्यक्रमहरू पनि सीप विकास तालीम केन्द्रहरूबाटै मूल्याङ्कन गर्ने व्यवस्था मिलाइनेछ।

३६. भूकम्पका कारण आफ्नो थातथलोबाट विस्थापित भई अन्यत्र बसोबास गरिरहेका जनसमुदायको पुनर्स्थापना र पुनर्वासको तत्काल प्रबन्ध गरिनेछ। यस सम्बन्धी विस्तृत अध्ययन गरी उपयुक्त नीति र योजना सहित जोखिमपूर्ण भू-बनोट भएका स्थानबाट सम्भव भएसम्म नजिकको सुरक्षित स्थानमा स्थानान्तरण गरिनेछ।

३७. भूकम्पले क्षति पुऱ्याएका ऐतिहासिक सम्पदा, मठ मन्दिर, गुम्बा, मस्जिद र संरचनाहरूलाई तिनको मौलिक तथा सांस्कृतिक स्वरुप कायमै राख्ने गरी आधुनिक प्रविधिका साथ निर्माण गरिनेछ। यसमा उपलब्ध भएसम्म स्वदेशी वस्तु तथा श्रमको उपयोग गरिनेछ। यिनको निर्माणमा **"हाम्रो धरोहर - हामै दायित्व"** अभियान सञ्चालन गरिनेछ। यसका लागि राष्ट्रिय पुनर्निर्माण कोष अन्तरगत छुट्टै **सम्पदा कोष** व्यवस्था

गरी स्वदेश तथा विदेशमा रहेका नेपालीहरूले रकम जम्मा गर्न सक्ने व्यवस्था गरिनेछ। सम्पदा कोषमा आम नेपालीको अपनत्व र योगदान बढाउन दूरसञ्चार सेवा दस्तूरमा १ प्रतिशत थप गरी उक्त रकम जम्मा गर्ने प्रबन्ध गरेको छु। नेपाल सरकारले स्वीकृत गरेको ढाँचा, स्वरुप र गुणस्तर कायम हुने गरी स्वदेशी तथा विदेशी संस्थाले यस्ता सांस्कृतिक सम्पदाहरूको निर्माण गर्न चाहेमा निर्माण अनुमति दिइनेछ। क्षतिग्रस्त पुरातात्विक तथा सांस्कृतिक सम्पदास्थलको वरिपरि रहेका व्यक्तिगत घरहरूलाई समेत सो स्थलको सांस्कृतिक महत्व झल्किने किसिमले पुनर्निर्माण गर्न प्रोत्साहन गरिनेछ।

**<u>आर्थिक क्रियाकलापहरूको पुनर्ताजगीकरण</u>**

३८. चालु आर्थिक वर्षको पछिल्लो तीन महिनादेखि सुस्ताएको आर्थिक क्रियाकलापहरूलाई वित्तीय र मौद्रिक उपायबाट पुनर्जीवन दिइनेछ। पूँजी निर्माणमा सरकारी लगानी वृद्धि र निजी लगानीका लागि वातावरण तयार गरिनेछ। पुनर्निर्माण कार्यक्रमहरूको सञ्चालनपछि स्वदेशी उत्पादन तथा आयात हुने निर्माण सामाग्रीको बढ्दो मागले आर्थिक क्रियाकलापमा हुने बढोत्तरीसँगै अर्थतन्त्र चलायमान हुनेछ।

३९. विदेशी लगानी आकर्षित गर्न विदेशी लगानी तथा प्रविधि हस्तान्तरण ऐनमा समयानुकूल सुधार गरिनेछ। आगामी आर्थिक वर्षदेखि विदेशी नागरिकले सहज प्रक्रियाबाट नेपालमा अपार्टमेण्ट खरिद गर्न पाउने व्यवस्था गरिनेछ। लगानी प्रवर्द्धनका लागि आगामी आर्थिक वर्षमा **"लगानी सम्मेलन"** आयोजना गरिनेछ। ठूला पूर्वाधारका अतिरिक्त सम्भाव्य अन्य क्षेत्रमा सार्वजनिक-निजी साझेदारीमा लगानी गरिनेछ।

४०. वित्तीय पूर्वाधार विकासमा लगानी गर्न सक्षम हुने निजी क्षेत्र समेतको सहभागितामा पूर्वाधार विकास बैङ्क स्थापना गर्ने प्रारम्भिक कार्य अगाडि बढाइनेछ। पूर्वाधारमा लगानी वृद्धि गर्न सक्षम हुने गरी एनआइडीसी विकास बैङ्क र जलविद्युत लगानी तथा विकास कम्पनी लिमिटेडको पुनर्संरचना गरिनेछ।

४१. लगानीमैत्री वातावरणको निर्माण गरी पूर्ण रुपमा सञ्चालनमा नआएका औद्योगिक क्षेत्रमा नयाँ लगानीकर्तालाई उद्योग स्थापना गर्ने वातावरण मिलाइनेछ। सार्वजनिक निकायले १५ प्रतिशतसम्म बढी महङ्गो भए पनि स्वदेशी वस्तुहरू प्रयोग गर्नुपर्ने नीतिलाई कडाइका साथ लागु गरिनेछ।

४२. आयात प्रतिस्थापन गर्दै निर्यात सम्भावना भएको सिमेण्ट उद्योगमा बढ्दै गएको चासो समेतलाई ध्यानमा राखी यस उद्योगको शीघ्र प्रवर्द्धनको लागि सिमेण्ट उद्योगस्थलसम्म बाटो र बिजुली पुऱ्याउने नीतिलाई निरन्तरता दिइनेछ। आगामी आर्थिक वर्षमा १६ वटा सिमेण्ट उद्योगका लागि खानीस्थल पहुँच मार्ग तथा १२ वटा सिमेण्ट उद्योगका लागि विद्युत उपकेन्द्र तथा प्रसारण लाइन निर्माण गर्न रू. ६३ करोड विनियोजन गरेको छु। यस्ता सडकहरू उद्योगी आफैंले निर्माण गर्न चाहेमा सरकारले गरेको लागत अनुमानमा नबढ्ने गरी निर्माण गर्न दिइनेछ।

४३. सिमेण्ट उद्योगलाई आवश्यक पर्ने ४ हजार ८ सय मेट्रिक टनसम्म चुनढुङ्गा उत्खनन् गरी ३ हजार मेट्रिक टनसम्म क्लिङ्कर वा सिमेण्ट उत्पादन गर्ने उद्योग स्थापना गर्दा प्रारम्भिक वातावरणीय परीक्षण मात्र गरे हुने व्यवस्था गरिनेछ। सिमेण्ट उद्योगको पूर्वाधारमा गरिएको लगानीले यस उद्योगमा पारेको सकारात्मक प्रभावबाट पाठ सिक्दै अन्य औद्योगिक पूर्वाधारका लागि समेत लगानी गर्ने नीति अनुरुप आगामी आर्थिक वर्ष रामेछापको ठोसेमा फलाम खानीस्थलसम्म बाटो र बिजुली पुऱ्याउन आवश्यक बजेट विनियोजन गरेको छु।

४४. रुग्ण उद्योगहरूको पहिचान सम्बन्धी मापदण्ड परिमार्जन गरी पुनरुत्थानका लागि सहुलियत तथा सुविधा उपलब्ध गराइनेछ।

४५. नेपाली कला र संस्कृति झल्किने परम्परागत उद्यमहरूको विकास गर्न युवा उद्यमशीलताको विकास गरिनेछ। महिला उद्यमशीलता विकास गर्न महत्वपूर्ण भूमिका निभाउँदै आएको महिला उद्यमशीलता कोषबाट परियोजना धितोमा ऋण प्रवाह कार्यक्रमलाई थप १० जिल्लामा विस्तार गरिनेछ।

४६. आर्थिक क्रियाकलाप विस्तारमा वित्तीय पहुँचको महत्वपूर्ण भूमिका हुने भएकाले प्रत्येक घरपरिवारको कम्तीमा एक बैङ्क खाता खोल्ने कार्यलाई अभियानको रुपमा सञ्चालन गरिनेछ। राज्यद्वारा प्रदान गरिने नगद हस्तान्तरण बैङ्क खातामार्फत् उपलब्ध गराउने व्यवस्था गरिनेछ।

४७. भूकम्पबाट प्रभावित पर्यटन क्षेत्रको पुनरुत्थानका लागि पर्यटकीय वस्तुको विकास, बजारीकरण र पहुँच वृद्धिमा जोड दिइनेछ। भूकम्प प्रभावित क्षेत्रहरूको सुरक्षा परीक्षण (Safety Audit) गराई स्वदेशी तथा विदेशी पर्यटकहरूलाई पर्यटकीय स्थलहरू सुरक्षित रहेको प्रति आश्वस्त गराइनेछ।

४८. पर्यटन क्षेत्रलाई अर्थतन्त्रको दरिलो आधार क्षेत्रको रुपमा विकास गर्न राष्ट्रिय पर्यटन रणनीति कार्ययोजनालाई कार्यान्वयन गरिनेछ। महिला तथा स्थानीय समुदायको सहभागिता बढाउँदै पर्यटन उद्योगमा स्थानीय उत्पादनको उपयोगमा जोड दिइनेछ। पर्यटन पूर्वाधार एवं प्रवर्द्धनको कार्यको लागि रू. १ अर्ब १ करोड विनियोजन गरेको छु।

४९. त्रिभुवन विमानस्थलको स्तरोन्नतिको कार्यलाई उच्च प्राथमिकताका साथ अगाडि बढाइनेछ। यसका लागि रू. १ अर्ब ७५ करोड छुट्याएको छु। पोखरा क्षेत्रीय अन्तर्राष्ट्रिय विमानस्थलको मुआब्जा वितरणको कार्य सम्पन्न गरी आगामी आर्थिक वर्षदेखि निर्माण कार्य शुरु गरिनेछ। त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थलको हवाइ चापलाई कम गर्न आन्तरिक वायुसेवाहरूलाई काठमाडौं बाहिरका विमानस्थलबाट सेवा सञ्चालन गर्न प्रोत्साहन गरिनेछ। विमानस्थलहरूको निर्माण एवं सुधारको लागि रू. ५ अर्ब ७५ करोड विनियोजन गरेको छु।

५०. बढ्दै गएको व्यापार घाटा कम गर्न नेपालको तुलनात्मक लाभ भएका वस्तु तथा सेवाको उत्पादन वृद्धि गर्न निजी क्षेत्रलाई प्रोत्साहन गर्न तेस्रो मुलुकको निर्यातमा दिंइदै आएको प्रोत्साहन तथा नगद अनुदानलाई निरन्तरता दिएको छु। चालु आर्थिक वर्षमा निर्यात भएको वस्तुको परिमाणभन्दा बढी निर्यात गरेमा थप परिमाणका लागि शतप्रतिशत नगद अनुदान थप गर्ने व्यवस्था मिलाएको छु।

<u>सन्तुलित विकास</u>

५१. मुलुकमा अझै पनि आर्थिक-सामाजिक विषमता कायम रहेको छ। आर्थिक विकासमा सबै क्षेत्रको अपनत्व सुनिश्चित गर्न र विकासको प्रतिफल सबै क्षेत्रमा सन्तुलित र न्यायपूर्ण ढङ्गले पुऱ्याउनु जरूरी छ। यस तथ्यलाई आत्मसात् गर्दै सन्तुलित विकासलाई टेवा पुग्ने गरी यो बजेट तयार गरेको छु।

**(क) तराई-मधेश**

५२. तराई-मधेशको पूर्वाधारमा विशेष महत्व राख्ने हुलाकी राजमार्गलाई ५ वर्षभित्र सम्पन्न गर्ने अठोटका साथ आगामी वर्षका लागि रू. ३ अर्ब १९ करोड विनियोजन गरेको छु। यस अन्तरगतको भिट्टामोड-जनकपुर सडकको स्तरोन्नतिका लागि रू. २५ करोड विनियोजन गरेको छु। पूर्व पश्चिम राजमार्गको स्तरोन्नति गरी ४ लेनको बनाउने कार्य शुरु गर्न आवश्यक बजेट विनियोजन गरेको छु।

५३. तराई-मधेशका रणनीतिक महत्वका र सहरी सडकहरूको निर्माण कार्यलाई निरन्तरता दिइनेछ। यस क्षेत्रका ४७ सडकहरूलाई बहुवर्षीय ठेक्का प्रक्रियामा निर्माण गरिनेछ। मिथिला क्षेत्र सडक सुधारका लागि रू. ३१ करोड विनियोजन गरेको छु। बर्दिवास-सिमरा खण्डको रेल्वे ट्र्याक निर्माण र जग्गा खरिदका लागि रू. १ अर्ब ८६ करोड विनियोजन गरेको छु।

५४. तराई-मधेशका १२ जिल्लाहरूमा धान उत्पादनको पकेट क्षेत्र विकास गरिनेछ। तराई-मधेशको सबै कृषियोग्य भूमिमा पाँच वर्षभित्र सिंचाइ सुविधा उपलब्ध गराउने गरी ठूला सिंचाइ आयोजनाहरू सञ्चालन गरिनेछ। सुनसरी-मोरङ्ग सिंचाइ आयोजनालाई पूर्ण क्षमतामा सञ्चालन गर्नुका साथै निर्माणाधीन अन्य सिंचाइ आयोजनालाई निर्धारित समयमा सम्पन्न गरिनेछ। आगामी वर्ष तराई-मधेशमा ४८ वटा डीप ट्युबवेलहरू जडान गर्ने कार्य सम्पन्न हुनेछ। निर्माणाधीन सिक्टा, रानी-जमरा कुलरिया र बबई सिंचाइ आयोजनाहरूको निर्माणका लागि रू. ३ अर्ब ७६ करोड विनियोजन गरेको छु। यसैगरी आवश्यक मर्मत सम्भारको अभावमा पूर्ण क्षमतामा सञ्चालन हुन नसकेका वृहत् सिंचाइ आयोजनाहरूको पुनर्स्थापनाका लागि रू. ५२ करोड छुट्याएको छु।

५५. जनताको तटबन्ध कार्यक्रमलाई निरन्तरता दिएको छु। जल उत्पन्न प्रकोप नियन्त्रणका कार्यक्रमहरू तराई-मधेशलाई डुबानबाट बचाउने गरी लक्षित गरिनेछ। चुरेको विनाशबाट तराई-मधेशमा बढ्दै गएको मरुभूमिकरण रोक्नका लागि राष्ट्रपति चुरे तराई मधेश कार्यक्रमलाई थप क्षेत्रमा विस्तार गरिनेछ। यस कार्यक्रमका लागि रू. १ अर्ब ९६ करोड छुट्याएको छु। चुरे संरक्षणका लागि आवश्यक कानुनी व्यवस्था गरिनेछ।

५६. तराई-मधेशमा ठूला पूर्वाधारका आयोजना तथा कार्यक्रमहरू सञ्चालन गर्नुका साथै आधुनिक सुविधासम्पन्न १० वटा नयाँ सहर निर्माणको सम्भाव्यता अध्ययन गरिनेछ। विराटनगर, जनकपुर, वीरगञ्ज, भैरहवा, नेपालगञ्ज र धनगढीमा आवश्यक सहरी पूर्वाधारहरूको विस्तार गरिनेछ। यी सहरहरूलाई लक्षित गरी ६ लेनको व्यापारिक मार्ग निर्माण भइरहेको छ। यसका लागि यथेष्ट बजेट विनियोजन गरेको छु। कार्य प्रगतिका आधारमा थप बजेट उपलब्ध गराउनेछु। यिनका अतिरिक्त बर्दिवास-जलेश्वर, गण्डक नहर, चनौटा-कृष्णनगर, वसन्तपुर-कटहरिया-कवाहीगोठ-पिपराडि-पदम रोड र तराई सहरी सडकको निर्माण कार्य शुरु गरिनेछ। वृहत्

नेपालगञ्ज नगरको अवधारणा अनुरुप सम्पूर्ण नेपालगञ्ज क्षेत्रलाई समेट्ने वृहत् चक्रपथ निर्माणको प्रारम्भिक कार्य शुरु गरिनेछ।

५७. तराई-मधेशलाई राजधानीसँग जोड्ने काठमाडौं तराई-मधेश द्रुतमार्गको निर्माण आगामी वर्ष शुरु गरिनेछ। यसका लागि रू. १ अर्ब विनियोजन गरेको छु।

५८. तराई-मधेशका जिल्लाहरूमा कृषि प्रशोधन केन्द्रहरू स्थापना गर्नुका साथै उपयुक्त स्थानहरूमा औद्योगिक कोरिडोरको विकास गरिनेछ। आगामी आर्थिक वर्षमा बुटवलको तिनाउ कोरिडोरमा औद्योगिक क्षेत्र स्थापनाको विस्तृत आयोजना तयारी गरिनेछ। कञ्चनपुरको दैजीमा औद्योगिक क्षेत्र विकास गर्न र भैरहवाको विशेष आर्थिक क्षेत्र सञ्चालनका लागि आवश्यक बजेट विनियोजन गरेको छु।

५९. तराई-मधेशका जिल्लाहरूमा खानेपानीमा देखिएको आर्सेनिकको समस्यालाई समाधान गर्न विशेष कार्यक्रम सञ्चालन गरिनेछ। जलाधार क्षेत्र संरक्षण र बाँधयुक्त जलाशय निर्माणबाट पानीको दीगो आपूर्तिको लागि नयाँ आयोजनाहरूको पहिचान गरिनेछ।

६०. आगामी वर्ष राजविराज, नेपालगञ्ज र धनगढी विमानस्थलहरूलाई स्तरोन्नति गर्न बजेटको व्यवस्था गरेको छु। भैरहवास्थित गौतम बुद्ध विमानस्थलहरूको निर्माण आगामी दुई वर्षभित्र सम्पन्न गर्ने गरी रू. २ अर्ब ५० करोड विनियोजन गरेको छु।

६१. पूर्व पश्चिम विद्युत प्रसारण लाइनहरूको निर्माण कार्य शुरु गर्नुका साथै ढल्केवर-मुजफ्फरपुर, कुशाहा-कटैया, बर्दघाट-गोरखपुर, वीरगञ्ज-परवानीपुर अन्तरदेशीय प्रसारण लाइनहरूको निर्माणलाई तीब्रता दिइनेछ। यीमध्ये ढल्केवर-मुजफ्फरपुर ४०० के.भी. प्रसारण लाइनको निर्माण कार्य आगामी आर्थिक वर्षमा नै सम्पन्न हुनेछ। लम्की-महेन्द्रनगर प्रसारण लाइन निर्माणको सम्भाव्यता अध्ययन कार्य शुरु गरिनेछ।

६२. सांस्कृतिक र ऐतिहासिक धरोहर लुम्बिनी र जनकपुरको विकासका लागि यथेष्ट बजेट विनियोजन गरेको छु। लुम्बिनी क्षेत्रको गुरुयोजना अनुरुपका कार्यहरू शीघ्र सम्पन्न गरी बुद्धिष्ट सर्किटको प्रारम्भिक कार्य शुरु गरिनेछ।

६३. गरिबीको गहनता तुलनात्मक रुपमा बढी रहेका पर्सा, बारा, रौतहट, सर्लाही, महोत्तरी, धनुषा, सिराहा र सप्तरीका दक्षिणी सीमावर्ती ११४ वटा गाउँ विकास

समिति र ४ वटा नगरपालिकामा स्थानीय आर्थिक-सामाजिक पूर्वाधार विकास तथा आय आर्जन र सचेतना अभिवृद्धिका लागि विशेष कार्यक्रम सञ्चालन गरिनेछ। यसका लागि रू. १६ करोड विनियोजन गरेको छु।

६४. तराई-मधेशका अल्पसंख्यक र उत्पीडित जनताहरूका लागि ल्याइएको सामाजिक सुरक्षाका कार्यक्रमहरूलाई निरन्तरता दिएको छु। तराईका पिछडिएका दलित र सीमान्तकृत वर्गका कक्षा ११ र कक्षा १२ मा अध्ययनरत छात्राहरूका लागि रामनारायण मिश्र विशेष छात्रवृत्ति उपलब्ध गराइनेछ। यसबाट ८० हजार छात्राहरू लाभान्वित हुनेछन्।

**(ख) हिमाली-पहाडी र दुर्गम क्षेत्र**

६५. पहाडी क्षेत्रमा यातायातको सुगमता बढाउन सबै जिल्ला सदरमुकाममा बाह्रै महिना सवारी साधन चल्ने सडक निर्माण गरिनेछ। निर्माणाधीन मध्य पहाडी लोकमार्ग निर्माणको लागि रू. १ अर्ब ९५ करोड विनियोजन गरेको छु। कार्य प्रगतिका आधारमा थप बजेट उपलब्ध गराउनेछु।

६६. उत्तर दक्षिण लोकमार्गको रुपमा रहेका कोशी र कर्णाली कोरिडोरको निर्माण कार्यलाई तीब्रता दिन आवश्यक बजेट छुट्याएको छु। सम्भाव्यताका आधारमा भेरी र राप्ती कोरिडोरको निर्माणको प्रारम्भिक कार्य शुरु गरिनेछ। यिनका अतिरिक्त राँके-रवि-भेडेटार, सल्लेघाट-रामेछाप-साँघुटार, चरिकोट-जिरी, गैंडाकोट-रामपुर-राम्दी, लमही-घोराही-तुल्सीपुर-कपुरकोट र भालुवाङ-वाग्दुला-भीमगिट्टे सडकहरूको निर्माण/स्तरोन्नति कार्य शुरु गरिनेछ।

६७. यस क्षेत्रमा रहेका पर्यटकीय स्थलहरूलाई आकर्षक गन्तव्यको रुपमा विकास गरिनेछ। यस क्षेत्रमा रहेका पदयात्रा मार्गहरूको स्तरोन्नति गर्दै ग्रेट हिमालयन ट्रेकिङ्ग ट्रेलको निर्माणलाई तीब्रता दिइनेछ। सल्लेरी-चौरीखर्क-सगरमाथा पर्यटन सडक निर्माणको सम्भाव्यता अध्ययन गरिनेछ। यस क्षेत्रमा रहेका धार्मिक तथा सांस्कृतिक क्षेत्रहरूको विकासमा विशेष ध्यान दिइनेछ।

६८. जलविद्युतको प्रचुर सम्भावना भएको यस क्षेत्रमा निर्माणाधीन ठूला जलविद्युत आयोजनाहरूको निर्माणलाई तीब्रता दिइनेछ। माथिल्लो तामाकोशी जलविद्युत आयोजनाको निर्माण कार्य दुई वर्षभित्र सम्पन्न गर्ने सक्ने गरी आगामी आर्थिक वर्षमा रू. २ अर्ब विनियोजन गरेको छु। आगामी आर्थिक वर्षमा १४० मेगावाट क्षमताको तनहुँ जलविद्युत आयोजनाको निर्माण कार्य शुरु गरिनेछ। विस्तृत

आयोजना प्रतिवेदन तयार भएको १,२०० मेगावाट क्षमताको बूढीगण्डकी जलविद्युत आयोजनाको निर्माणको प्रारम्भिक कार्य शुरु गरिनेछ। कार्य प्रगतिका आधारमा थप बजेट उपलब्ध गराउने गरी यस आयोजनाका लागि रू. ३ अर्ब ३७ करोड विनियोजन गरेको छु। नलसिं गाड जलविद्युत आयोजनाको विस्तृत आयोजना प्रतिवेदन तयार गर्न रू. ४७ करोड छुट्याएको छु।

६९. हिमाली क्षेत्रमा यार्सागुम्बाको अनुसन्धान, यसको व्यावसायिक उत्पादन, सङ्कलन तथा बिक्री वितरणलाई व्यवस्थित गर्न तीन महिना भित्र आवश्यक अध्ययन गरी प्राप्त सुझावहरूलाई क्रमशः लागु गरिनेछ।

७०. हिमाली र पहाडी क्षेत्रमा एकीकृत र व्यवस्थित बस्ती विकासको योजना कार्यान्वयन गरिनेछ। भूकम्प प्रभावित जिल्ला सदरमुकामहरू र ती जिल्लाका नगरपालिकाहरूको एकीकृत बस्ती विकासको गुरुयोजना तयार गरी कार्यान्वयन गरिनेछ। यो गुरुयोजना तयारीका लागि रू. २५ करोड विनियोजन गरेको छु।

**(ग) कर्णाली र सुदूर पश्चिम**

७१. कर्णाली क्षेत्रको विकासका लागि हाल कार्यान्वयनमा रहेका कार्यक्रमहरूलाई तीब्रता दिइनेछ। कर्णाली रोजगार कार्यक्रमका साथै कर्णाली क्षेत्रका लागि लक्षित सामाजिक सुरक्षाका कार्यहरूलाई थप प्रभावकारी बनाइनेछ।

७२. आगामी दुई वर्षभित्र हुम्ला र डोल्पा जिल्ला सदरमुकामहरूलाई राष्ट्रिय सडक सञ्जालमा जोडिनेछ। नेपाली सेनाद्वारा निर्माणाधीन जाजरकोट-दुनै सडक र उत्तर दक्षिण लोकमार्ग अन्तरगत कर्णाली कोरिडोरको निर्माणमा तीव्रता दिइनेछ।

७३. सुर्खेत-जुम्ला सड़क र बाजुरा-कोल्टी सडकको बाँकी खण्डको कालोपत्रे गर्ने कार्य आगामी आर्थिक वर्ष सम्पन्न गरिनेछ। सहजपुर-बोक्तान-दिपायल सडक निर्माण कार्य शुरु गरिनेछ। देवस्थल-कनैडाँडा-चौरजहारी-डोल्पा सडकको निर्माण कार्यलाई तीब्रता दिइनेछ। सुदूर र मध्य पश्चिम विकास क्षेत्रमा रहेका जडिबूटी उत्पादनस्थल र प्रशोधन केन्द्रहरूसम्म पुग्ने बाटो निर्माण कार्यलाई निरन्तरता दिइनेछ।

७४. जुम्लामा विशेष आर्थिक क्षेत्र स्थापनाका लागि अध्ययन कार्य पूरा गरी आवश्यक जग्गा प्राप्ति र पूर्वाधार विकासको कार्य शुरु गरिनेछ। जुम्ला जिल्लामा पाँच मेगावाट क्षमताको जवा खोला जलविद्युत आयोजनाको अध्ययनका लागि बजेट

व्यवस्था गरेको छु। कर्णाली स्वास्थ्य विज्ञान प्रतिष्ठानको भौतिक पूर्वाधार निर्माण गर्न रू. २५ करोड विनियोजन गरेको छु।

७५. कर्णाली अञ्चलको पर्यटकीय पूर्वाधार विकासका लागि प्याकेज कार्यक्रमहरू कार्यान्वयन गरिनेछ। कर्णाली राजमार्ग र विमानस्थलहरूको स्तरोन्नति गरी आवागमन सहज बनाइनेछ। मुगुको रारा लगायतका क्षेत्रहरूमा सुविधासम्पन्न पर्यटकीय होटेल तथा रिसोर्ट निर्माण गरी सञ्चालन गर्न चाहने निजी क्षेत्रलाई कर छुट दिने विगतको नीतिलाई निरन्तरता दिएको छु।

७६. सुदूर पश्चिमलाई सुन्दर क्षेत्रको रुपमा विकास गरिनेछ। यस क्षेत्रमा रहेका धार्मिक पर्यटकीय महत्वका स्थलहरूको संरक्षणमा जोड दिइनेछ। पञ्चेश्वर बहुउद्देश्यीय आयोजना निर्माणको आवश्यक पूर्व तयारी सम्पन्न गरी शीघ्र कार्यान्वयन प्रारम्भ गरिनेछ। विदेशी लगानी आकर्षित गरी पश्चिम सेती जलविद्युत आयोजनाको निर्माण कार्य अघि बढाइनेछ।

७७. महाकाली नदीमा पुलको डिजाइन कार्य यथाशीघ्र सम्पन्न गरी निर्माण शुरु गर्न बजेट छुट्याएको छु। सेती लोकमार्ग र महाकाली लोकमार्गको निर्माण कार्यलाई निरन्तरता दिइनेछ। आगामी वर्ष टनकपुर लिङ्क सडक, पाटन-पञ्चेश्वर सडक र दार्चुला-टिङ्कर सडकको निर्माणका लागि रू. २९ करोड छुट्याएको छु। महाकाली तेस्रो सिंचाइ आयोजनाको निर्माण कार्यलाई तीव्रता दिन रू. ७५ करोड विनियोजन गरेको छु।

७८. सुदूर पश्चिमाञ्चलका धनगढी, अत्तरिया, भीमदत्त र झलारी नगरपालिकाहरूमा एकीकृत सहरी पूर्वाधार विकास कार्यक्रमका लागि आवश्यक बजेट विनियोजन गरेको छु। कैलालीको गेटा मेडिकल कलेजको पूर्वाधार निर्माणका लागि बजेट छुट्याएको छु।

**(घ) ग्रामीण क्षेत्र**

७९. ग्रामीण विकासका प्रमुख पात्र स्थानीय निकायहरू नै हुन्। स्थानीय निकायको संलग्नता र सबलता बिना ग्रामीण विकासले गति लिंदैन। गाउँ विकास समितिहरूलाई आर्थिक रूपमा सबल बनाउन सशर्त पूँजीगत अनुदानमा हाल दिंइदै आएको रकममा रू. ५ लाखले वृद्धि गरेको छु। गाउँ विकास समितिहरू एकापसमा गाभिई सबल आर्थिक इकाईमा रुपान्तरण गर्न प्रोत्साहित गरिनेछ। यस अनुसार एकापसमा गाभिने गाउँ विकास समितिहरूलाई पाँच वर्षसम्म दुई वटा गाभिएमा रू.

५० लाख, तीन वटा गाभिएमा रू. १ करोड, चार वटा गाभिएमा रू. १ करोड ५० लाख र पाँच वटा गाभिएमा रू. २ करोड अनुदान उपलब्ध गराउने व्यवस्था गरेको छु।

८०. चालु आर्थिक वर्षदेखि शुरु गरिएको निर्वाचन क्षेत्र विकास कार्यक्रम अन्तरगत माननीय सदस्यहरू सम्मिलित संयन्त्रले छनौट गरेका जिल्ला परिषद्ले स्वीकृत गरेका पूर्वाधार आयोजनाहरू जनसहभागिताको आधारमा कार्यान्वयन गर्न प्रत्येक निर्वाचन क्षेत्रका लागि उपलब्ध गराउँदै आएको रकममा ५० प्रतिशत थप गरी रू. १ करोड ५० लाख पुऱ्याएको छु। निर्वाचन क्षेत्र विकासका लागि सबै माननीय सदस्यहरूलाई उपलब्ध गराउँदै आइएको रू. १५ लाखमा रू. ५ लाख थप गरेको छु।

८१. स्थानीय यातायात, खानेपानी तथा सरसफाई, साना सिंचाइ तथा नदी नियन्त्रण, लघु जलविद्युत तथा वैकल्पिक ऊर्जा, आवास तथा सहरी विकास, फोहरमैला व्यवस्थापन र सामाजिक पूर्वाधार सम्बन्धी जिल्लास्तरीय कार्यक्रमहरू स्थानीय तहबाट नै सम्पादन हुने व्यवस्था गरेको छु।

८२. जिल्लास्तरीय विकास आयोजनाहरू जिल्ला विकास समितिबाट कार्यान्वयन हुनेछन्। लामो समयदेखि ट्र्याक खोलिएका तर बाह्रै महिना सवारी साधन चल्न नसकेका ५३ हजार किलोमिटर सडकमा आगामी पाँच वर्षभित्र ८४० वटा सडक पुल निर्माण गरिनेछ। आगामी दुई वर्षभित्र ३६५ वटा तुइनहरूलाई झोलुङ्गे पुलहरूले प्रतिस्थापन गरिनेछ। झोलुङ्गे पुलहरूका लागि आगामी आर्थिक वर्षमा रू. २ अर्ब ५ करोड छुट्याएको छु।

८३. मानव विकास सूचकाङ्कमा सबैभन्दा पछाडि परेको बाजुरा जिल्लामा नमूना एकीकृत ग्रामीण बस्ती विकास कार्यक्रम शुरु गरी क्रमशः जोखिममा रहेका जिल्लाहरूमा समेत यो कार्यक्रमलाई विस्तार गर्दै लगिनेछ ।

८४. भूकम्प प्रभावित र दुर्गम जिल्लाहरूमा चालु आर्थिक वर्षको पछिल्लो तीन महिनामा कार्यान्वयन गर्ने गरी तयार भएका कार्यक्रमहरू भूकम्प लगायतका कारणले कार्यान्वयन हुन नसकी बजेट फ्रीज हुन गएकोमा सो बराबरको रकम फ्रीज प्रमाणको आधारमा कार्यक्रमलाई निरन्तरता दिन आगामी आर्थिक वर्षमा थप निकासा दिने व्यवस्था गरेको छु।

## (ङ) सहरी पूर्वाधार

८५. **"विकासको लहर, सुविधा सम्पन्न सहर"** को नारा सहित आधुनिक सुविधा सम्पन्न सहर निर्माण गर्ने अभियान शुरु गरिनेछ। सहरी विकासको २० वर्षे दीर्घकालीन कार्ययोजना बनाई आगामी आर्थिक वर्षदेखि कार्यान्वयनमा लगिनेछ।

८६. सहरहरूलाई हरित सहर बनाउने कार्यलाई अभियानको रुपमा सञ्चालन गरिनेछ। पोखरा, धरान र ललितपुर उपमहानगरपालिकाहरूलाई पर्याप्त हरियाली सहितको वातावरणमैत्री सहरको रूपमा विकास गरिनेछ। सहरी क्षेत्रमा सौर्य ऊर्जाको प्रयोगलाई प्रोत्साहित गर्ने नीतिलाई निरन्तरता दिएको छु।

८७. नगरपालिकाहरूबाट लागत साझेदारीमा गरिएका पूर्वाधार निर्माणका कार्यहरू उत्साहजनक देखिएकाले सो प्रयोजनका लागि रू. १ अर्ब ६५ करोड विनियोजन गरेको छु। नयाँ गठन भएका नगरपालिकाहरूको पूर्वाधार विकास तथा क्षमता वृद्धिका लागि रकम रू. ६९ करोड थप विनियोजन गरेको छु। नयाँ नगरपालिकाहरूलाई औसतमा रू. १ करोड निशर्त पूँजीगत अनुदान उपलब्ध गराउन आवश्यक रकम विनियोजन गरेको छु।

८८. भू-उपयोग नीतिको प्रभावकारी कार्यान्वयन गरी आवासको लागि छुट्याइएको जमीनमा मात्र बस्ती विकास गरिनेछ। व्यक्ति वा कम्पनीले आवासको लागि जग्गा प्लटिङ्ग गर्दा स्थानीय निकायको पूर्व स्वीकृति लिनुपर्ने व्यवस्था अनिवार्य गरिनेछ। आधारभूत पूर्वाधारको सहज पहुँचको सुनिश्चितता गरेर मात्रै बस्ती विकास गर्न अनुमति दिइनेछ।

८९. ग्रामीण दूरसञ्चार प्रविधि कोषको रकम समेत उपयोग गरी भूकम्प प्रभावित जिल्लाहरूमा ब्रोडब्याण्ड इन्टरनेट सुविधा उपलब्ध गराई जिल्ला सदरमुकाम लगायत नगरपालिकाहरूलाई सूचना प्रविधियुक्त सहरको रुपमा विकास गरिनेछ।

९०. काठमाडौं उपत्यकामा एउटा, लुम्बिनी क्षेत्रमा एउटा  र निजगढलाई स्मार्ट सिटीको रुपमा विकास गर्न गुरुयोजना तयार गरी कार्यान्वयन गरिनेछ। मध्य पहाडी लोकमार्गमा १० वटा आधुनिक सहरको पूर्वाधार निर्माणको लागि रू. ४४ करोड विनियोजन गरेको छु।

९१. ऐतिहासिक सहर विराटनगर स्थापना भएको एक शताब्दी पूरा भएको अवसरमा सडक, खानेपानी, हरियाली र सरसफाइ जस्ता आधारभूत सहरी पूर्वाधारका

कार्यक्रमहरू सञ्चालन गरिनेछ। विराटनगर चक्रपथ निर्माण कार्यलाई निरन्तरता दिनुका साथै सहरी सडकहरू कालोपत्रे गर्ने कार्य सम्पन्न गरिनेछ। विराटनगर विमानस्थलको स्तरोन्नति गर्दै कटहरिमा रेल्वे सेवाको स्थापना र नेपाल भारत सीमामा एकीकृत भन्सार जाँच चौकी निर्माण गरिनेछ। विराटनगर रङ्गशालाको निर्माण कार्यलाई तीव्रता दिइनेछ।

९२. आगामी आर्थिक वर्षदेखि सवारी चालक अनुमतिपत्रलाई स्मार्ट कार्डमा वितरण गर्न शुरु गरिनेछ। सवारी साधनको नम्बर प्लेट डिजिटल गरी सेन्सर प्रविधिबाट आवागमन नियन्त्रण गर्ने प्रविधि थालनी गरिनेछ।

९३. काठमाण्डौं उपत्यकाभित्र र प्रमुख राजमार्गहरूमा सवारी तथा सडक व्यवस्थापन र समन्वयका लागि यातायात व्यवस्था विभाग, सडक विभाग र ट्राफिक प्रहरी सम्मिलित कार्यमूलक संयन्त्र तयार गरिनेछ। प्रमुख सहर र राजमार्गहरूमा सीसीटीभीको संख्या वृद्धि गर्दै लगिनेछ। राजमार्गमा विद्युतीय जाँचद्वार राखी सवारी आवागमन र जाँच प्रणाली व्यवस्थित र झञ्झटरहित बनाइनेछ।

९४. आगामी तीन वर्ष भित्र प्रत्येक नेपालीका घरमा न्यूनतम आधारभूत सुविधा सहितको शौचालय निर्माण गर्ने कार्यलाई अभियानको रुपमा सञ्चालन गरिनेछ।

९५. **"सफा नदी सभ्य सहर"** को अवधारणा अनुरुप नदी र सभ्यताबीचको अन्तर सम्बन्ध झल्काउने गरी व्यवस्थित बसोबास र सहरीकरण गरिनेछ। नदी किनाराका खाली ठाउँमा छिटो बढ्ने प्रकृतिका रुख रोपी हरियाली बढाइनेछ। नदी किनारको बगैंचा, सज्जा तथा सम्भारमा क्षेत्र विभाजन गरी स्थानीय क्लब, टोल सुधार समिति, सामाजिक संघ संस्था, व्यावसायिक प्रतिष्ठान तथा सरकारी निकायहरूलाई जिम्मा दिइनेछ।

**(च) राष्ट्रिय राजधानी सहर**

९६. मुलुक संघीय स्वरुपमा गएपछि काठमाडौं उपत्यकालाई राष्ट्रिय राजधानीको रुपमा विकास गर्नु जरूरी हुने भएकाले काठमाडौं उपत्यकाको विकासलाई प्याकेजको रुपमा अगाडि बढाइनेछ। काठमाडौं उपत्यकाको एकीकृत विकासका लागि तयार पारिएको गुरुयोजनाले औंल्याएका कार्यक्रमहरूलाई क्रमशः कार्यान्वयनमा लगिनेछ।

९७. काठमाडौं उपत्यकाको खाली स्थानमा वृक्षारोपण गर्ने कार्यक्रमलाई अभियानको रुपमा सञ्चालन गरिनेछ। उपत्यकामा पर्याप्त खुला स्थानको व्यवस्था गर्न प्रति २५ हजार जनसंख्याका लागि एक खुला स्थानको व्यवस्था गरिनेछ। यसका लागि आवश्यकता अनुसार व्यक्तिगत जग्गा समेत खरिद गरिनेछ। खुला स्थानको साजसज्जा, सौन्दर्यीकरण र मर्मत सम्भारमा निजी र सार्वजनिक व्यावसायिक प्रतिष्ठानहरूलाई व्यावसायिक सामाजिक उत्तरदायित्व अन्तर्गत संलग्न हुन प्रोत्साहित गरिनेछ।

९८. उपत्यकाभित्र नगरपालिकाहरूले तोकेको स्थानहरूमा भूमिगत तथा बहुतले पार्किङ्गस्थल निर्माण गर्न निजी क्षेत्रलाई प्रोत्साहन गरिनेछ। महानगरको विशेषता अनुरुप राजधानी सहरका बजार, रेष्टुराँ, व्यावसायिक कारोबार र सार्वजनिक यातायात राती अबेरसम्म खुला रहने व्यवस्था गरिनेछ। शान्ति सुरक्षाको प्रभावकारी व्यवस्था गर्न आवश्यक सम्बद्ध निकायहरूलाई समन्वयात्मक ढङ्गमा परिचालन गरिनेछ।

९९. वागमती नदीको सुन्दरीजलदेखि सुन्दरीघाटसम्मको ढल निर्माण आगामी दुई वर्षभित्र सम्पन्न गरिनेछ। वागमती नदी सफाइ अभियानलाई संस्थागत गर्दै काठमाडौं उपत्यकाको सभ्यताको रुपमा रहेको विष्णुमती, रुद्रमती, मनोहरा, हनुमन्ते र नख्खु खोला लगायतका नदीहरू ढल तथा फोहोरमुक्त बनाइनेछ।

१००. नगरपालिकाहरूसँगको सहकार्यमा काठमाडौं उपत्यकामा आधारभूत उपयोग स्तरका ४ सय सार्वजनिक शौचालय निर्माण कार्य शुरु गरिनेछ। सरकारले तोकेको कार्यविधि अन्तरगत रही सार्वजनिक शौचालयहरूको निर्माण र सञ्चालनमा निजी क्षेत्रलाई समेत सहभागी गराइनेछ।

१०१. काठमाडौंको चक्रपथ विस्तारका साथै उपत्यकाका सडक मर्मत तथा विस्तार कार्यलाई उच्च प्राथमिकता दिइनेछ। सवारी चाप भएका चौबाटोहरूमा फ्लाइओभर निर्माणको पूर्व तयारी गरिनेछ। सूर्यविनायक-धुलिखेल सडकलाई ६ लेनमा विस्तार गर्ने कार्यका लागि रू. १ अर्ब ७ करोड छुट्याएको छु।

१०२. काठमाडौंमा अन्तर्राष्ट्रियस्तरको कभर्ड हल निर्माण गरिनेछ। दशरथ रङ्गशालाको पुनर्निर्माणका लागि रू. १३ करोड विनियोजन गरेको छु। यसको विकल्पका रुपमा ललितपुरको च्यासलमा फूटबल मैदान निर्माण गर्न रू. ४ करोड विनियोजन गरेको छु। काठमाडौंको मूलपानीमा निर्माणाधीन क्रिकेट मैदानको निर्माणका लागि रू. ११ करोड विनियोजन गरेको छु। आगामी आर्थिक वर्षमा हुने डिभिजन ३ स्तरको

अन्तर्राष्ट्रिय क्रिकेट खेल सञ्चालन गर्न कीर्तिपुर र पुल्चोकको क्रिकेट मैदानको स्तरोन्नति गरिनेछ।

१०३. काठमाडौं उपत्यकामा अन्तर्राष्ट्रिय सम्मेलन केन्द्र निर्माणको सम्भाव्यता अध्ययन गरिनेछ। ललितपुरको साझा यातायातको खाली रहेको जग्गामा सार्वजनिक लगानी सहित दक्षिण एशियाली सम्मेलन केन्द्र निर्माण गरिनेछ। यसका लागि सरकारले विगतमा दिएको रू. ९ करोड ऋणलाई शेयरको रुपमा परिणत गरिनेछ।

१०४. उपत्यकाका मूल सडकहरूमा अपाङ्गता मैत्री ४० सीट भन्दा बढी क्षमताका सार्वजनिक सवारी मात्र सञ्चालन अनुमति दिइनेछ। नयाँ दर्ता भएका साना सार्वजनिक सवारीलाई सहायक सडकमा मात्र सञ्चालन अनुमति दिइनेछ। उपत्यकामा सवारी चाप कम गर्न मेट्रो तथा मोनो रेल सञ्चालन सम्बन्धी सम्भाव्यता अध्ययन गर्नका लागि रू. ८ करोड छुट्याएको छु।

१०५. काठमाडौं उपत्यकामा खानेपानीको वितरणलाई सहज र नियमित तुल्याउन आगामी दुई वर्षभित्र मेलम्ची खानेपानी आयोजनाको निर्माण सम्पन्न गरिनेछ। मेलम्ची खानेपानी आयोजनाबाट काठमाडौं उपत्यकामा प्राप्त हुने पानी वितरणका लागि प्रभावकारी प्रणाली निर्माणमा जोड दिइनेछ। मेलम्ची खानेपानी आयोजनाका लागि रू. ४ अर्ब ९५ करोड विनियोजन गरेको छु।

१०६. मेलम्ची आयोजना पूरा हुनु अघि काठमाडौं उपत्यकाको सहरी क्षेत्रमा धारा तथा ट्याङ्करबाट पानी वितरण गर्ने समयतालिका निर्धारण गरी सार्वजनिक गरिनेछ। तोकिएको समयमा पानी वितरण नगर्ने जिम्मेवार निकायको प्रमुखलाई कारवाही गरिनेछ।

**(छ) प्रादेशिक विकास**

१०७. मुलुक संघीय संरचनामा गएपछि बन्ने प्रदेशहरूको व्यवस्थापनमा शुरुदेखि नै सोच्नु आवश्यक हुन्छ। प्रादेशिक सडकहरूको विस्तृत आयोजना प्रतिवेदन तयारीका लागि रू. ११ करोड छुट्याएको छु। प्रादेशिक राजधानी सहरहरूको आधारभूत पूर्वाधार विकासका लागि आवश्यक बजेट विनियोजन गरेको छु।

१०८. स्थानीय निकाय वित्तीय आयोगको पुनर्संरचना गरी संघीय संरचना अनुकूल प्राकृतिक स्रोत, साधन र राजस्वको बाँडफाँट र यस सम्बन्धी विवाद व्यवस्थापन गर्न सक्षम निकायको रुपमा राष्ट्रिय वित्तीय आयोग स्थापना गर्न अध्ययन गरिनेछ।

## खाद्य, कृषि, सिंचाइ, भूमि र वन व्यवस्थापन

१०९. अर्थतन्त्रको मेरुदण्डको रुपमा रहेको कृषि क्षेत्रको रुपान्तरण र आधुनिकीकरणको आवश्यकताबारे दुईमत हुन सक्दैन। कृषिलाई एउटा मन्त्रालय विशेषको कार्यक्रमको रुपमा मात्र नहेरी यसको समग्र विकासका लागि कृषि विकास रणनीतिले पहिचान गरे बमोजिम कृषि प्रसार सेवा, अनुसन्धान, सिंचाइ, भूमिसुधार, विद्युतीकरण, कृषि सडकका साथै कृषि उपज प्रशोधन र प्रवर्द्धन लगायतका कार्यक्रमहरू समन्वयात्मक ढङ्गले सञ्चालन गर्नु जरुरी छ।

११०. आगामी पाँच वर्षभित्र देशका सबै कृषियोग्य भूमिमा सिंचाइ सुविधा पुर्‍याउने गरी सिंचाइका कार्यक्रमहरू सञ्चालन गरिनेछ। निर्माणाधीन सिंचाइ आयोजनाहरूलाई निर्धारित समयमै सम्पन्न गर्न आवश्यक बजेट छुट्याएको छु। निर्माणाधीन सतह र भूमिगत आयोजनाहरूको निर्माण एवं भइरहेका सिंचाइ प्रणालीहरूको मर्मत सम्भार तथा क्षमता विस्तार गरी आगामी आर्थिक वर्षमा थप २८ हजार ३ सय हेक्टर कृषियोग्य जमीनमा सिंचाइ सुविधा पुग्नेछ। सबै जिल्लाहरूमा कृषि उत्पादन वृद्धिका लागि मझौला सिंचाइ सुविधा विस्तार गरिनेछ। मझौला सिंचाइका लागि रू. ३ अर्ब ४ करोड विनियोजन गरेको छु।

१११. सतह र भूमिगत सिंचाइको सम्भावना नभएका टार क्षेत्रमा नयाँ प्रविधिमा आधारित सिंचाइ प्रणालीको विकासलाई निरन्तरता दिइनेछ। लिफ्ट सिंचाइका सम्भाव्य स्थानहरूमा नवीकरणीय ऊर्जा उपयोग गरी कम्तीमा ५० हेक्टर जमीनमा सिंचाइ गर्ने किसानलाई नवीकरणीय ऊर्जा र कृषि ऋणको ब्याजमा ५० प्रतिशत अनुदान दिने व्यवस्था मिलाएको छु।

११२. व्यावसायिक कृषि उपज, खासगरी तरकारी खेतीको पकेट क्षेत्रमा ७ हजार १ सय स्यालो ट्युबवेल जडान गरिनेछ। ठूला तथा मझौला सिंचाइ प्रणालीहरूको सञ्चालन र मर्मत सम्भारलाई दीगो र भरपर्दो बनाउन उपभोक्ताको क्षमता अभिवृद्धि गरी उनीहरूकै स्वामित्वमा सञ्चालन र मर्मत गर्ने उपयुक्त संरचना खडा गरिनेछ।

११३. सुनकोशी, कालीगण्डकी र ठूलीगाड कैलाली जस्ता इण्टरवेशिन वाटर ट्रान्सफर आयोजनाहरूका साथै कन्काई र राप्ती बाँध जलाशययुक्त योजनाहरूको अध्ययन शुरु गरिनेछ।

११४. कृषि प्रसार सेवालाई पचहत्तरै जिल्लामा प्रभावकारी ढङ्गले सञ्चालन गरिनेछ। प्रत्येक गाउँ विकास समितिमा एक जना कृषि वा पशु प्राविधिकको व्यवस्था गर्न बजेट

विनियोजन गरेको छु। कृषि सूचना प्रसारका लागि मोबाइल फोनको उपयोग गर्न प्रोत्साहन गरिनेछ। मौलिक कृषिजन्य पदार्थको जगेर्नाका साथै खाद्य सुरक्षाका लागि उत्पादन वृद्धि गर्ने गरी कृषि अनुसन्धान गरिनेछ। कृषि अनुसन्धानका लागि रू. २ अर्ब ८ करोड बजेट विनियोजन गरेको छु।

११५. कृषि सामाग्री कृषकको खेतसम्म र उत्पादित वस्तु बजारसम्म पुऱ्याउन कृषि तथा ग्रामीण सडक सञ्जालको विस्तार गरिनेछ। ग्रामीण र कृषि सडक तथा पुल निर्माणका लागि रू. १५ अर्ब २५ करोड विनियोजन गरेको छु। कृषि उत्पादनका लागि विद्युतीकरणको ठूलो भूमिका रहने हुँदा तीन वर्षभित्र सबै गाउँ विकास समितिहरूमा ग्रामीण विद्युतीकरणको सञ्जाल विस्तार गरिनेछ। यसका लागि रू. २ अर्ब विनियोजन गरेको छु।

११६. कृषि व्यवसायमा गरिने लगानीमा यस वर्ष घोषणा गरिएको ६ प्रतिशतभन्दा बढी ब्याज तिर्नु नपर्ने व्यवस्था कायमै राखेको छु। कृषि कर्जा प्रवाहको प्रक्रियालाई थप सरलीकृत गरी साना र मध्यम कृषकको पहुँच बढाइनेछ। उत्पादन लागत न्यून गर्न र जमीनको उत्पादकत्व वृद्धिका लागि व्यावसायिक खेती गर्न छरिएर रहेका जग्गालाई एकत्रित गरी सामुहिक खेती प्रणाली प्रोत्साहन गर्न विगतदेखि दिंइदै आएको सहुलियत र सुविधा कायमै राखेको छु।

११७. धान, गहुँ, मकै, कोदो जस्ता मुख्य खाद्यान्न बालीको उत्पादन वृद्धिका लागि पकेट क्षेत्र घोषणा गरी उत्पादनका साधनहरूमा पहुँच, भण्डारण र बजारीकरणको व्यवस्था गरिनेछ। उच्च मूल्य प्राप्त गर्न सकिने र नेपालको तुलनात्मक लाभ भएका कृषि उपजहरूको उत्पादन र प्राङ्गारिक खेती प्रणालीलाई प्रोत्साहन दिइनेछ। यस्ता वस्तुहरूको प्रमाणिकरण, ब्राण्डिङ्ग र विश्व व्यापार सङ्गठनमा दर्ता गरी निर्यात वृद्धि गर्न विशेष कार्यक्रम सञ्चालन गरिनेछ। कुनै गाउँ विकास समितिले प्राङ्गारिक कृषि उपज मात्र उत्पादन गरेमा त्यस्ता गाविसलाई दिइने अनुदानमा ५० प्रतिशत थप गर्ने व्यवस्था मिलाएको छु।

११८. मत्यपालन कार्यलाई व्यावसायिक बनाइनेछ। आगामी वर्षमा थप ६ हजार मेट्रिक टन माछा उत्पादन गरिनेछ। भुरा माछा उत्पादन र थप १ हजार हेक्टर जमीनमा पोखरी निर्माण गर्न रू. ३७ करोड विनियोजन गरेको छु। आगामी आर्थिक वर्षमा रसायनिक तथा प्राङ्गारिक मल र उन्नत बीऊमा अनुदान उपलब्ध गराउन रू. ६ अर्ब १० करोड विनियोजन गरेको छु।

११९. निजी वा सहकारी क्षेत्रले बैङ्किङ्ग क्षेत्रबाट ऋण लिई कृषि विकास मन्त्रालयले निर्दिष्ट गरेको मापदण्ड बमोजिम शीतघर र खाद्यान्न भण्डारण स्थापना गरी सञ्चालन गर्न चाहेमा पहिलो ५ वर्षसम्म शतप्रतिशत ब्याज अनुदान दिइनेछ। यस्ता शीतघर र खाद्यान्न भण्डारणका लागि आवश्यक प्राविधिक सहायता सरकारले उपलब्ध गराउनुका साथै विद्युतको डिमाण्ड शुल्कमा शतप्रतिशत छुट दिइनेछ। कृषि तथा पशु बीमा प्रिमियममा अनुदान दिने नीति कायमै राख्दै यस्तो बीमा प्रिमियममा लाग्दै आएको मूल्य अभिवृद्धि कर छुट दिएको छु।

१२०. सम्भाव्यताका आधारमा कृषिमा आधारित उद्योग स्थापना गर्न प्रोत्साहित गरिनेछ। धुलो दुध उत्पादन गर्न सार्वजनिक तथा निजी डेरी उद्योगहरूलाई प्रोत्साहन गरिनेछ। आगामी आर्थिक वर्षमा स्वीकृत मापदण्ड अनुरुप ५० भन्दा बढी गाई, भैंसी पाल्ने पशुपालक कृषकलाई पौष्टिक घाँस उत्पादन गर्ने फोडर मेशीनको खरिद मूल्यमा ५० प्रतिशत अनुदान दिने व्यवस्था मिलाएको छु। कृषि यान्त्रिकरणलाई प्रोत्साहित गर्न खेत जोत्ने ट्र्याक्टर, पावर टिलर, गहुँ काट्ने र चुट्ने मेशीन जस्ता यन्त्रहरूको आयातमा भन्सार तथा मूल्य अभिवृद्धि कर छुट दिने व्यवस्था गरेको छु।

१२१. व्यक्ति विशेषले आवासीय प्रयोजनका लागि भूमि खरीद गरी प्लटिङ्ग गर्ने र बिक्री वितरण गर्ने कार्य व्यवसायकै रुपमा फष्टाउँदै गएको र अनियन्त्रित आवासको विस्तार भइरहेकाले आगामी आर्थिक वर्षदेखि कानुनी रुपमा स्थापित योग्य र अनुभवी संस्थालाई मात्र यसरी जग्गा विकास गर्न दिने कानुनी व्यवस्था गरिनेछ। भूकम्प लगायतका विपद् व्यवस्थापनका लागि सहज हुने गरी भूमिको स्वामित्व हस्तान्तरण र कित्ताकाट सम्बन्धी मापदण्ड तयार गरिनेछ।

१२२. भूमि व्यवस्थापनलाई आधुनिकीकरण गरी नवीनतम प्रविधिबाट भूमिको नापनक्शा र अभिलेखको गुणस्तर वृद्धि गर्ने, सूचना प्रविधिमा आधारित नक्शा प्रणाली विकास गर्ने र भूमि सम्बन्धी स्रेस्ता, सूचना तथा तथ्याङ्कलाई अद्यावधिक र कम्प्युटरकृत गरिनेछ। जग्गा नापजाँचको लागि आवश्यक आधारभूत नियन्त्रण बिन्दु पुनर्स्थापित गरिनेछ।

१२३. वन दशक कार्यक्रम अन्तर्गत भूकम्प प्रभावित जिल्लामा बाँसको नर्सरी निर्माण तथा वृहत वृक्षारोपणको कार्यक्रम ल्याइनेछ। निजी वन दर्ता, नर्सरी स्थापना तथा सञ्चालन, वृक्षारोपण तथा संरक्षणमा अनुदानको व्यवस्था मिलाएको छु। नदी उकास तथा सार्वजनिक, पर्ति र ऐलानी जग्गामा गरिब तथा विपन्न समुदायलाई नर्सरी

स्थापना, वृक्षारोपण तथा वन संरक्षण गर्न अनुदान दिइनेछ। वृक्षारोपणलाई व्यक्तिको जीवनको महत्वपूर्ण घटनासँग आबद्ध गरी प्रत्येक नागरिकले आफ्नो जीवनकालमा केही रुख रोप्ने र संरक्षण गर्ने अभियान सञ्चालन गरिनेछ।

१२४. भूकम्प पश्चातको पुनर्निर्माणका लागि आवश्यक पर्ने काठको आपूर्ति सहज बनाउन मुलुकका विभिन्न वन क्षेत्रमा रहेका ढलापडा सबै रुखहरूको निष्कासन र बिक्री वितरण प्रक्रिया सरल बनाइनेछ।

१२५. सम्भाव्य जिल्लाहरूमा जैतुन, लोठसल्ला, तेजपात, टिम्मुर र डालेचुकको व्यावसायिक खेतीका लागि कार्यक्रम सञ्चालन गरिनेछ। महत्वपूर्ण वनस्पतिको व्यावसायिक प्रवर्द्धनका लागि सम्भाव्य क्षेत्रहरूमा टिस्यु कल्चर केन्द्रको स्थापना गरिनेछ। छिटो बढ्ने व्यावसायिक उपयोगका रुखहरू रोप्न प्रोत्साहित गरिनेछ।

१२६. वनको वैज्ञानिक पद्धतिबाट सीमाङ्कन गरिनेछ। वन क्षेत्रमा रहेका बसोबास समस्या समाधान र अतिक्रमण व्यवस्थापन गर्न अधिकार सम्पन्न आयोगको गठन गरिनेछ। सीमसार तथा रामसारका वन क्षेत्रका तालतलैयाको संरक्षणमा ध्यान दिइनेछ।

१२७. कोशीटप्पु वन्यजन्तु आरक्ष र ढोरपाटन शिकार आरक्षलाई संरक्षण कार्यक्रम सहित पर्यटकीय गन्तव्यको रुपमा विकास गरी स्थानीय रोजगारीका अवसरमा वृद्धि गरिनेछ। कोशीटप्पु वन्यजन्तु आरक्षमा पशुपंक्षीको वासस्थान सुधार गरी चरा अवलोकन क्षेत्रको रुपमा विकास गर्नुका साथै वन्यजन्तु उद्धार केन्द्रको स्थापना गरिनेछ।

१२८. कृषि क्षेत्रको समग्र विकासका लागि कृषि विकासतर्फ रू. २६ अर्ब ६८ करोड, सिंचाइतर्फ रू. २० अर्ब २२ करोड, भूमिसुधार तर्फ रू. ४ अर्ब ७६ करोड विनियोजन गरेको छु। वन क्षेत्रका कार्यक्रमहरूलाई रू. १२ अर्ब २७ करोड छुट्याएको छु।

**<u>पूर्वाधार विकासः सडक, ऊर्जा</u>**

१२९. सडक र ऊर्जा क्षेत्रमा सञ्चालन गरिने महत्वपूर्ण कार्यक्रमहरू माथि उल्लेख गरिसकिएको छ। यी क्षेत्रका अन्य कार्यक्रमहरू यसप्रकार छन्:-

**(क) सडक**

१३०. ठूला पूर्वाधारको विकास बिना मुलुकको सर्वाङ्गीण विकास सम्भव नहुने कुरामा दुईमत हुँदैन। अधुरा आयोजनाहरू सम्पन्न नगर्ने तर हरेक वर्ष नयाँ नयाँ

आयोजनाहरू थप मात्र गर्दा विकास प्रक्रिया ढिला हुन जान्छ। तसर्थ, यस बजेटमा शुरु भएका र शुरु हुने आयोजनाहरू समयमै सम्पन्न गर्ने गरी कार्यक्रम तयार गरिएको छ।

१३१. सडक सञ्जालको विस्तार आर्थिक समृद्धिको आधार भएकाले सडक तथा पुल निर्माण र मर्मत सम्भारका लागि प्राथमिकताका साथ बजेट विनियोजन गरेको छु। निर्माणाधीन राष्ट्रिय र क्षेत्रीय सडकहरू निश्चित समयमा सम्पन्न गरिनेछ। राष्ट्रिय राजमार्गहरूको पुल निर्माणलाई उच्च प्राथमिकता दिइनेछ। निर्माणाधीन पुलहरूको निर्माण सम्पन्न नहुञ्जेल रणनीतिक सडकमा पर्ने बाहेक अन्य पुलहरूको निर्माण कार्य शुरु गरिने छैन।

१३२. राष्ट्रिय राजमार्गमा विस्तार हुँदै गएको अनियन्त्रित बस्ती विकासले गर्दा असहज भएको आवागमनलाई सहज बनाउन र सवारी दुर्घटना न्यून गर्न राष्ट्रिय राजमार्गमा दुवैतर्फ क्रमशः बारबेरा गरिनेछ। बस्तीका कारण आवागमनमा हुने अवरोध हटाउन आवश्यकता अनुसार फ्लाइओभर र अण्डर पासहरू बनाउने प्रक्रिया शुरु गरिनेछ।

१३३. अरनिको राजमार्गको बाह्रबिसे-तातोपानी खण्डको स्तरोन्नति र सुदृढिकरण गरिनेछ। झोर-छहरे सुरुङ्ग मार्गको सम्भाव्यता अध्ययन गर्नुका साथै काठमाडौं-मैलुङ्ग-रसुवागढी सडकलाई चीनसँगको दोस्रो ठूलो व्यापारिक नाकाको रुपमा विकास गरिनेछ।

१३४. आगामी वर्ष थानकोट-नौबिसे सुरुङ्ग मार्ग निर्माण शुरू गरिनेछ। यसका लागि रू. १ अर्ब ६७ करोड विनियोजन गरेको छु। नारायणघाट-मुग्लिङ्ग सडकको स्तरोन्नति र लेन विस्तार गर्न रू. २ अर्ब १३ करोड छुट्याएको छु। भूकम्पबाट क्षतिग्रस्त सड़क संरचनाहरूको मर्मत सम्भार तथा पुनर्निर्माणका लागि तदारुकता अपनाई राजधानी सहरलाई जोड्ने सडकहरूलाई तयारी हालतमा राखिनेछ। काठमाडौं जोड्ने वैकल्पिक सडकको रूपमा निर्माणाधीन कान्ति राजपथलाई ६ महिनाभित्र मालवाहक सवारी साधन गुड्न सक्ने गरी तयार गरिनेछ। आसन्न वर्षातका कारण राजमार्गहरूमा प्रकृतिजन्य अवरोध न्यून गर्न पर्याप्त मात्रामा बेलीब्रीजहरू र ठूला यन्त्र उपकरण व्यवस्था गरी सँधै तयारी अवस्थामा राखिनेछ।

१३५. देशका सबै सहरहरूमा स्वीकृत मापदण्ड बमोजिमका सडक विस्तार कार्यक्रमहरू प्राथमिकताका साथ सञ्चालन गरिनेछ। रणनीतिक सडकहरूमा नियमित, पटके र

आवधिक मर्मत तथा पुनःस्थापना सम्बन्धी कार्यहरू योजनाबद्ध रुपमा सम्पन्न गर्न रू. ८३ करोड विनियोजन गरेको छु।

१३६. स्थानीयस्तरबाट निर्माण हुने सडक समेत गरी आगामी आर्थिक वर्षमा १ हजार ९ सय ४२ किलोमीटर नयाँ ट्र्याक खुल्नुका साथै ७ सय ९५ किलोमीटर सडकमा कालोपत्रे गरिनेछ। यस्तै १ सय ७० वटा पुलहरूको निर्माण सम्पन्न हुनेछ। यी कार्यहरूका लागि रू. ५४ अर्ब छुट्याएको छु।

**(ख) ऊर्जा**

१३७. सरकारी क्षेत्रबाट निर्माणाधीन सबै जलविद्युत आयोजनाहरू निश्चित समयमा सम्पन्न गर्ने गरी निर्माण कार्यलाई तीब्रता दिइनेछ। जलविद्युत उत्पादनमा निजी क्षेत्रलाई दिंइदै आएको सुविधा तथा सहुलियतलाई निरन्तरता दिएको छु।

१३८. बहुउद्देश्यीय र जलाशययुक्त विद्युत आयोजनाहरूको पहिचान, अध्ययन तथा विकासलाई प्राथमिकता दिइनेछ। कर्णाली-चिसापानी, नौमुरे, सुनकोशी, माथिल्लो अरुण, आँधीखोला, उत्तरगङ्गा आयोजनाहरूको अध्ययन कार्य प्राथमिकताका साथ अघि बढाइनेछ। निर्यातमूलक ८ सय मेगावाट क्षमताको तामाकोशी तेस्रो र ४ सय मेगावाट क्षमताको मर्स्याङ्दी जलविद्युत आयोजना निर्माणका लागि वार्ता प्रक्रिया अगाडि बढाई आगामी वर्ष सम्झौता गरिनेछ। विप्रेषणलाई उत्पादनशील क्षेत्र र पूँजी निर्माणमा उपयोग गर्न "रेमिट हाइड्रो" अवधारणा अन्तरगत आयोजना विकास कार्य अगाडि बढाइनेछ।

१३९. उत्पादित विद्युत राष्ट्रिय प्रसारण लाइनमा जोड्नका लागि प्रसारण लाइन निर्माणमा रहेको जग्गा प्राप्ति र रुख कटानको समस्यालाई समन्वयात्मक ढङ्गबाट गरी प्रसारण लाइन निर्माण गरिनेछ। प्रसारण लाइनहरूको निर्माणका लागि रू. १२ अर्ब ७३ करोड छुट्याएको छु।

१४०. यसै वर्ष स्थापना भएको राष्ट्रिय प्रसारण ग्रीड कम्पनीबाट निजी क्षेत्रलाई समेत सहभागी गराई निर्माण र हस्तान्तरण (Build and Transfer) विधिमा प्रसारण लाइनहरूको निर्माण गरिनेछ। राष्ट्रिय प्रसारण प्रणालीका केही प्रसारण लाइनहरू तत्काल यस कम्पनीमा हस्तान्तरण गरिनेछ। राष्ट्रिय तथा अन्तर्राष्ट्रिय विद्युत व्यापारको लागि विद्युत व्यापार कम्पनी स्थापना गरिनेछ।

१४१. सरकारी तथा सार्वजनिक निकायहरूको विद्युत उपयोगमा मितव्ययिता अपनाउन कम विद्युत खपत गर्ने बल्बको प्रयोग गर्न र कम विद्युत खपत गर्ने विद्युतीय उपकरणहरूको आयात र उपभोगलाई प्रोत्साहन गरिनेछ। सहरी क्षेत्रका घरका छानाहरूमा सोलार प्यानलबाट विद्युत उत्पादन गरी बढी भएको विद्युत वितरण प्रणालीमा जोडेमा नेट मिटर जडान गरी खरिद गर्ने व्यवस्थालाई निरन्तरता दिएको छु।

१४२. लघु तथा साना जलविद्युत आयोजनाबाट विद्युत उत्पादन गर्ने कार्यलाई निरन्तरता दिइनेछ। जलविद्युतको परिपूरकको रुपमा वैकल्पिक ऊर्जा उत्पादन र वितरण गर्ने कार्यलाई उच्च प्राथमिकता दिएको छु। नगरपालिकाहरूमा सौर्य सडक बत्ती र सहरी क्षेत्रमा सौर्य ऊर्जा जडान गर्नका लागि रू. ४५ करोड विनियोजन गरेको छु।

१४३. आगामी वर्ष सौर्य घरेलु विद्युत प्रणाली जडान गर्न र सौर्य खानेपानी तथा सिंचाइ पम्प जडान गर्न अनुदानको व्यवस्था गरेको छु। घरायसी बायोग्याँस जडान र नवीकरणीय ऊर्जा प्रविधिको लागि केन्द्रीय ग्रामीण ऊर्जा कोष मार्फत ऋण प्रवाह गर्न आवश्यक रकम विनियोजन गरेको छु। भूकम्पले घर पूर्ण रुपले क्षति भएका परिवारका लागि बत्ती बाल्न तथा मोबाइल फोन चार्ज गर्न सौर्य बत्ती र भूकम्प प्रभावित जिल्लाहरूका घरपरिवारहरूमा तत्काल राहत स्वरुप पोर्टेवल मेटालिक रकेट स्टोभ्स जडान गरिनेछ। यी कार्यहरूका लागि रू. ४ अर्ब ८५ करोड विनियोजन गरेको छु।

१४४. ऊर्जा क्षेत्रको समग्र विकासका लागि जलविद्युत उत्पादन, प्रसारण र वितरणमा रू. ४५ अर्ब ७२ करोड र वैकल्पिक ऊर्जामा रू. ५ अर्ब ४९ करोड छुट्याएको छु।

## जोखिम तथा प्रकोप व्यवस्थापन

१४५. नदी किनारको जोखिममा रहेका जिल्ला सदरमुकाम बचावट कार्यक्रममा जोड दिइनेछ। नदी कटानबाट कृषि तथा बस्तीमा हुने क्षति न्यून गर्ने कार्यक्रमहरू सञ्चालन गरिनेछ। जनताको तटबन्ध कार्यक्रम अन्तर्गत तराईका १४ वटा ठूला नदीहरूमा २५ किलोमीटर तटबन्ध निर्माण गरिनेछ। महाकाली, कर्णाली, बबई र भेरी किनारको नदी कटान नियन्त्रण गरी सो बाट भएको क्षतिको पुनर्निर्माण कार्य आगामी वर्ष सम्पन्न गरिनेछ। भूकम्पले भू-बनोटमा परेको असर र वर्षातको पानीले पुऱ्याउन सक्ने क्षतिका लागि पूर्व तयारी गरिनेछ।

१४६. गत वर्ष बाँके, बर्दिया, दाङ, सुर्खेत र सिन्धुपाल्चोकमा आएको बाढी पहिरोका कारण भएको क्षतिको पुनर्निर्माण र सोसँग सम्बन्धित प्रकोप नियन्त्रण गर्नका लागि आवश्यक बजेट विनियोजन गरेको छु। नदी नियन्त्रण कार्यहरूका लागि रू. ३ अर्ब ११ करोड छुट्याएको छु।

१४७. प्रकोप व्यवस्थापनमा संलग्न प्राविधिक तथा सुरक्षा निकायहरूको क्षमता विस्तार गरिनेछ। यस्ता निकायहरूलाई आवश्यक पर्ने मेशीनरी तथा औजारहरूको सहज आपूर्ति र व्यवस्थापन गरिनेछ। विपद्को पूर्व तयारीका लागि यथेष्ट रकम विनियोजन गरेको छु। प्रकोप व्यवस्थापनको पूर्व तयारीका लागि नेपाली सेनाको प्राविधिक क्षमता बढाउन १२.५ मेगावाटको माडी खोला जलविद्युत आयोजना निर्माण गर्नका लागि आवश्यक व्यवस्था मिलाइनेछ।

१४८. विपद्, प्राकृतिक प्रकोप तथा महामारीको अवस्थामा तत्काल स्वास्थ्य सेवा प्रदान गर्न स्वास्थ्य संस्थाहरूलाई तयारी हालतमा राख्नुका साथै स्वास्थ्य मन्त्रालयमा आवश्यक औषधि तथा उपकरण सहितको टोली परिचालन हुनसक्ने गरी आवश्यक व्यवस्था मिलाइनेछ।

१४९. काठमाडौं उपत्यका लगायत देशभरका प्रमुख बस्तीहरूको भौगर्भिक बनौट र अवस्थितिको अध्ययन गराइनेछ। भू-उपयोग सम्बन्धी नयाँ कानुन तर्जुमा गरी कार्यान्वयनमा ल्याइनेछ। एकीकृत ढङ्गले सेवामा पहुँच पुऱ्याउने किसिमले भूकम्प प्रभावित सबै जिल्ला सदरमुकाम र ती जिल्लाहरूमा रहेका नगरपालिकाहरूको गुरुयोजना तयार गरी कार्यान्वयनमा लगिनेछ। यो ढाँचालाई क्रमशः अरू जिल्लामा समेत विस्तार गरिनेछ।

१५०. निर्माणाधीन संरचनाहरूलाई भूकम्पीय जोखिम सहन गर्न सक्ने बनाउँदै निर्माण सम्पन्न भई प्रयोगमा आइसकेका सबै भवनहरूको निर्माण स्वीकृत मापदण्ड पालन भए नभएको अनुगमन गरिनेछ। निजी तथा सार्वजनिक सबै खाले भवनहरूको निर्माण सुपरीवेक्षणका लागि अधिकार सम्पन्न प्राविधिकहरूको समूह परिचालन गरिनेछ।

१५१. भूकम्प मापन केन्द्रलाई आधुनिक प्रविधि र यन्त्र उपकरणले सुसज्जित बनाई भूकम्प सम्बन्धी अध्ययन केन्द्रको रुपमा विकास गरिनेछ। यसका लागि आवश्यक बजेट छुट्याएको छु।

१५२. विपद् व्यवस्थापनका सबै पक्ष समेटिएको विपद् व्यवस्थापन विधेयक व्यवस्थापिका-संसदमा प्रस्तुत गरिनेछ। विपद् व्यवस्थापन कार्यमा आवश्यक पर्ने सामाग्री, यन्त्र उपकरणहरूको पर्याप्त व्यवस्था गरी मुलुकका विभिन्न स्थानमा राखिनेछ। यस कार्यमा संलग्न हुने जनशक्तिको समेत व्यवस्था गरी तयारी हालतमा राखिनेछ। निजामती तथा सार्वजनिक संस्थानमा कार्यरत कर्मचारीहरूलाई समेत विपद् व्यवस्थापन तालीम दिइनेछ।

१५३. भूकम्प प्रभावित जिल्लाहरूमा पुनर्स्थापना तथा पुनर्निर्माणका प्रत्येक कार्यहरूमा सहयोग पुऱ्याउन समन्वयात्मक तवरले ठूलो संख्यामा सीपयुक्त युवा जनशक्ति स्वंयसेवकको रुपमा परिचालन गरिनेछ। यसलाई संस्थागत गर्दै अन्य विपद्का समयमा पनि सहजै परिचालन हुनसक्ने बनाइनेछ।

<u>सामाजिक सुरक्षा र गरिबी निवारण</u>

१५४. वार्षिक बजेटको ठूलो हिस्सा सामाजिक सुरक्षामा खर्च हुँदै आएता पनि कार्यक्रमहरू खुद्रा र छरिएर सञ्चालन गरिएकोले प्रभावकारी हुन सकेको छैन। सामाजिक सुरक्षाका कार्यक्रमहरूलाई एकत्रित र व्यवस्थित गर्दै यसमा भएको लगानी वास्तविक लाभग्राहीसम्म पुऱ्याउन एकीकृत सामाजिक सुरक्षा विधेयकलाई चालु अधिवेशनमै व्यवस्थापिका-संसद समक्ष प्रस्तुत गरिनेछ।

१५५. सामाजिक सुरक्षातर्फका कार्यक्रमहरूलाई निरन्तरता दिएको छु। राज्यको नगद हस्तान्तरण कार्यक्रमबाट सामाजिक सुरक्षा प्राप्त गर्ने जनताको संख्या २१ लाख ५२ हजार ८ सय ६१ छ। यीमध्ये ज्येष्ठ नागरिक ९ लाख ६४ हजार २ सय ९२, एकल महिला ६ लाख २१ हजार ९ सय ८०, अपाङ्गता भएका ६० हजार ६ सय ५६, लोपोन्मुख र सीमान्तकृत जाति, समुदाय २२ हजार ८ सय ९९ र दलित एवं कर्णालीका बालबालिका ४ लाख ८३ हजार ३४ छन्।

१५६. सत्तरी वर्ष नाघेका ज्येष्ठ नागरिकहरूलाई आगामी आर्थिक वर्षदेखि वृद्धभत्ता वापत रू. ५०० र वृद्धावस्था औषधोपचार खर्च रू. ५०० गरी मासिक रू. १ हजार उपलब्ध गराउने व्यवस्था मिलाएको छु। यसबाट ९ लाख १२ हजार ७ सय ६४ ज्येष्ठ नागरिकहरू लाभान्वित हुनुहुनेछ। राज्यबाट प्रदान गरिने सामाजिक सुरक्षाका कार्यक्रमहरूमा दोहोरोपना नहुने व्यवस्था गरिनेछ। सामाजिक सुरक्षा भत्तालाई बैङ्किङ्ग प्रणालीबाट वितरण गर्ने कार्यलाई देशव्यापी बनाइनेछ।

१५७. मातृ स्वास्थ्य र बाल स्वास्थ्यमा महत्वपूर्ण योगदान पुऱ्याउँदै आएका मातृ स्वास्थ्य कार्यकर्ताहरूको पोशाक भत्तामा रू. १ हजार थप गरी रू. ६ हजार पुऱ्याएको छु। मुटुरोग, मृगौला रोग, क्यान्सर, सिक्कल सेल एनिमिया, पार्किन्सन्स्, अलजाइमर्स् जस्ता कडा रोगको उपचार गर्न गरिब तथा विपन्न नागरिक एवं ज्येष्ठ नागरिक तथा बालबालिकाका लागि उपलब्ध गराउँदै आएको अनुदानलाई निरन्तरता दिएको छु।

१५८. विपन्न नागरिकहरूलाई दिंइदै आएको स्वास्थ्य सुविधाका लागि रू. ७५ करोड विनियोजन गरेको छु। निःशुल्क औषधि वितरण कार्यलाई थप प्रभावकारी र सुलभ बनाउन यसको बजेट दोब्बर पारेको छु। सरकारी स्वास्थ्य संस्थाहरूमा कानुनी रुपमा गर्भपतन गराउँदा शुल्क नलाग्ने व्यवस्था मिलाएको छु।

१५९. जन्म देखि २८ दिनसम्मको नवजात शिशुको सरकारी स्वास्थ्य संस्थामा निःशुल्क उपचार गर्ने व्यवस्था मिलाएको छु। मिगौंला र पाठेघरको क्यान्सर रोगको सरकारी स्वास्थ्य संस्थाहरूमा वर्षमा एकपटक निःशुल्क स्वास्थ्य परीक्षण गर्ने व्यवस्था मिलाएको छु।

१६०. योगदानमा आधारित स्वास्थ्य बीमा सञ्चालनमा हाल विभिन्न निकाय र संस्थाबाट भइरहेका क्रियाकलापहरूलाई एकिकृत गरी दोहोरो नपर्ने गरी सबै नेपालीलाई स्वास्थ्यको सामाजिक सुरक्षा कार्यक्रममा आबद्ध गरिनेछ। परीक्षणको रुपमा तीन जिल्लाहरू कैलाली, वागलुङ्ग र इलाममा २०७२ कार्तिकदेखि सामाजिक स्वास्थ्य सुरक्षा कार्यक्रमको दर्ता शुरु गरिनेछ। यो कार्यक्रम हिमाल, पहाड, तराई प्रत्येक क्षेत्र समेटिने गरी थप दश जिल्लामा विस्तार गरिनेछ।

१६१. पिछडिएका, विपन्न, दलित, लोपोन्मुख जाति र सीमान्तकृत समुदायहरूतर्फ लक्षित **"जनता आवास कार्यक्रम"** लाई विस्तार गर्न रू. ३३ करोड विनियोजन गरेको छु। आगामी आर्थिक वर्षमा यस कार्यक्रम अन्तर्गत थप १,२०० वटा घर निर्माण गरिनेछ।

१६२. सर्वेक्षण सम्पन्न भइसकेका २५ जिल्लाका गरिब घरपरिवारलाई परिचय पत्र वितरणको काम शुरु गरिनेछ। थप ५० जिल्लाहरूमा सर्वेक्षणको तयारी गर्न समेत रू. १६ करोड विनियोजन गरेको छु। गरिबी निवारण कोषका कार्यक्रमहरूलाई ग्रामीण पूर्वाधार विकासतर्फ लक्षित गरिनेछ। गरिबसँग विश्वेश्वर कार्यक्रमलाई विस्तार गर्न यस कार्यक्रममा बजेट थप गरेको छु।

१६३. दुर्गम क्षेत्र विकास, गरिबी निवारण, कर्णाली रोजगार, दलित उत्थान, दलित छात्रवृत्ति, जनजाति उत्थानजस्ता लक्षित वर्ग उन्मुख कार्यक्रमहरूलाई थप बजेट सहित निरन्तरता दिएको छु।

१६४. हलिया, कमैया, कमलरी, चेपाङ्ग, विपन्न मुसलमान, मधेशी दलित, सुदूर पश्चिम र मध्य पश्चिमका पिछडिएका १० जिल्लाका १ हजार जनालाई प्राविधिक डिप्लोमा अध्ययन गर्नका लागि छात्रवृत्तिको व्यवस्था गरिएको छ। यसको लागि रू. ११ करोड विनियोजन गरको छु।

१६५. छरिएर रहेका सामाजिक सुरक्षाका सम्पूर्ण कार्यक्रमहरूलाई क्रमशः एकीकृत गरी एकै निकायबाट सञ्चालन गर्न सामाजिक सुरक्षा कोषको संस्थागत पुनःसंरचना गरी क्षमतायुक्त बनाइनेछ।

१६६. नेपाली अर्थतन्त्रको एउटा महत्वपूर्ण स्तम्भको रुपमा रहेको सहकारी क्षेत्रलाई ग्रामीण क्षेत्रमा रोजगारी सिर्जना, आय वृद्धि र गरिबी निवारणको कार्यमा अधिकतम परिचालन गर्न प्रोत्साहन गरिनेछ।

१६७. कृषि तथा पशुपालन, फलफुल तथा तरकारी उत्पादन, कृषि उपजको प्रशोधन, शीत घर निर्माण, साना तथा मझौला उद्योग, कृषि बजार प्रवर्द्धन जस्ता क्रियाकलापहरू सञ्चालन गर्न सहकारी संस्थाहरू, सहकारीमा आवद्ध किसानहरू, उद्यमीहरूको समूहलाई सहुलियतपूर्ण ऋण र पूँजीगत अनुदानको व्यवस्था गरिनेछ।

१६८. सहकारी संस्थाहरूको प्रभावकारी अनुगमन र नियमनका लागि सहकारी तथा गरिबी व्यवस्थापन सूचना प्रणाली लागु गरिनेछ।

**<u>सामाजिक विकासः शिक्षा, स्वास्थ्य, महिला सशक्तिकरण</u>**

१६९. शिक्षा, स्वास्थ्य, खानेपानी र सरसफाइ जस्ता सामाजिक विकासका कार्यक्रमहरू प्राथमिकताका साथ सञ्चालन गरिनेछ। शिक्षामा आम नागरिकको पहुँच बढाउन आधारभूत तहसम्मको निःशुल्क शिक्षा प्रदान गरिएको छ। विभिन्न वर्ग, लिङ्ग, क्षेत्र र समुदायका विद्यार्थीका लागि सञ्चालित छात्रवृत्ति र दिवाखाजा कार्यक्रमलाई निरन्तरता दिएको छु। शिक्षा क्षेत्रको लागि जम्मा रू. ९८ अर्ब ६४ करोड विनियोजन गरेको छु।

१७०. शिक्षकहरूको दरबन्दी पुनरावलोकन गरी शिक्षक-विद्यार्थी अनुपात मिलाइनेछ। शिक्षकलाई एक विद्यालयबाट अर्को विद्यालयमा सरुवा गर्ने प्रावधान लागु गरिनेछ।

१७१. प्राविधिक जनशक्ति उत्पादन गर्न प्राविधिक तथा व्यावसायिक शिक्षालयहरू विस्तार गरिनेछ। आगामी आर्थिक वर्षमा शिक्षा, श्रम र उद्योग क्षेत्रमा आवश्यक पर्ने ७५ हजार जनशक्तिलाई सीप विकास गर्न छोटो अवधिको व्यावसायिक तालीम प्रदान गर्न बजेट विनियोजन गरेको छु।

१७२. सामुदायिक विद्यालयले प्रदान गर्ने शिक्षाको गुणस्तर अभिवृद्धि गरी विद्यार्थीको आकर्षण र शिक्षाको उपयोगिता बढाउनका लागि क्षेत्रीयस्तरमा नमुनाको रुपमा कम्तीमा एक एक वटा सुविधासम्पन्न र तालीमप्राप्त योग्य शिक्षकहरू सहितको आवासीय विद्यालयको विकास गरी सञ्चालनमा ल्याइनेछ। राजधानी लगायतका सहरहरूमा रहेका सुविधासम्पन्न विद्यालयहरूले दुर्गम जिल्लाहरूका विद्यालय व्यवस्थापन गरी सञ्चालन गर्न चाहेमा प्रोत्साहित गरिनेछ।

१७३. मानव विकास सुचकाङ्क न्यून रहेका, छात्रा भर्नादर कम भएका र छात्राको विद्यालय छाड्ने प्रवृत्ति बढी भएका जिल्लाहरूका सिमान्तकृत समुदायका छात्राहरूलाई आवासीय सुविधा रहेका विद्यालयमा अध्ययनको व्यवस्था मिलाइनेछ।

१७४. सामुदायिक विद्यालयको स्थायी दरबन्दीमा कार्यरत तर स्थायी हुन नसकेका ५ वर्षभन्दा बढी अस्थायी शिक्षकका रुपमा काम गरेका शिक्षकहरूलाई नेपाल सरकारले तोकेबमोजिमको सुविधा दिन सक्ने शिक्षा ऐनमा भएको कानुनी व्यवस्था अनुरुप यस्ता शिक्षकहरूलाई अवकाश दिन विशेष योजना ल्याइनेछ।

१७५. ग्रामीण र दुर्गम क्षेत्रका १०० सामुदायिक विद्यालयहरूमा परीक्षणको रुपमा ब्रोडब्याण्ड इण्टरनेटका माध्यमबाट अंग्रेजी, विज्ञान र गणित विषयको अध्यापन शुरु गरिनेछ। यसबाट ती विद्यालयका विद्यार्थीहरूको शिक्षाको गुणस्तरमा वृद्धि हुने अपेक्षा राखेको छु।

१७६. विद्यार्थी जीवनदेखि नै समुदायप्रति जिम्मेवार बन्न अभिप्रेरित गर्ने उद्देश्यले माध्यमिक तहमा छात्रवृत्ति प्राप्त गर्ने मेधावी छात्रछात्रालाई हप्तामा दुई घण्टा आफ्नो क्षेत्रमा रहेका निरक्षरहरूलाई साक्षर बनाउन प्रेरित गरी साक्षरता अभियान चलाइनेछ।

१७७. उच्च शिक्षाको गुणस्तरमा वृद्धि गर्न गठित आयोगका सुझावहरू क्रमशः कार्यान्वयन गरिनेछ। उच्च शिक्षाको गुणस्तर सुधार र विश्वविद्यालयहरूको पूर्वाधार विकास गर्न विश्वविद्यालय अनुदान आयोगका लागि रू. ८ अर्ब ७ करोड विनियोजन गरेको छु।

१७८. विपद् व्यवस्थापन, पूर्वाधार विकास, वातावरण, विज्ञान प्रविधि, कृषि, वन अर्थ वित्त लगायतका क्षेत्रमा अनुसन्धान गरी सरकारलाई पृष्ठपोषण गर्न विश्वविद्यालयहरूमा स्नातकोत्तर तथा विद्यावारिधि गर्ने विद्यार्थीहरूका लागि प्रधानमन्त्री शोधवृत्ति को व्यवस्था गरेको छु।

१७९. प्रतिभावान् युवा वैज्ञानिकहरूलाई शोध तथा अनुसन्धान तर्फ अभिप्रेरित गरी देशमा विज्ञान तथा प्रविधिको विकास गर्न नेपाल विज्ञान तथा प्रविधि प्रतिष्ठान मार्फत् अनुदान दिने व्यवस्था मिलाएको छु।

१८०. आधारभूत स्वास्थ्य सेवामा सबै नेपालीको पहुँच पुऱ्याउन प्रत्येक स्वास्थ्य संस्थामा कम्तीमा एक जना चिकित्सक उपलब्ध गराउने गरी **"एक गाउँ एक डाक्टर"** कार्यक्रमलाई क्रमशः लागु गरिनेछ। सबै सरकारी अस्पताल तथा स्वास्थ्य चौकीहरूमा औजार तथा उपकरण सहितको पूर्वाधार र आवश्यकता अनुसार स्वास्थ्यकर्मीको व्यवस्था गरिनेछ।

१८१. नवगठित नगरपालिकाहरूमा कम्तिमा पनि १५ शैय्याको अस्पताल स्थापना गर्न आगामी आर्थिक वर्षमा रू. २७ करोड विनियोजन गरेको छु। सरकारी स्वास्थ्य शिक्षण संस्थाबाट अध्यापन गरिने एम. डी. र एम. एस. लगायत स्नातकोत्तर तहको पढाइ सञ्चालन गर्न रू. २७ करोड छुट्याएको छु।

१८२. सामुदायिक तथा निजी अस्पतालहरूको भौतिक पूर्वाधार, यन्त्र उपकरण, जनशक्ति, सेवा शुल्क र औषधीको उपलब्धताको बारेमा प्रभावकारी अनुगमन गरिनेछ। मापदण्ड पालना नगर्ने र सरकारी निर्णयको अवज्ञा गर्ने त्यस्ता अस्पतालहरूलाई कानुन बमोजिम कडा कारवाही गरिनेछ। सामुदायिक अस्पतालहरूलाई दिइने अनुदानलाई स्पष्ट मापदण्डको आधारमा पारदर्शी, औचित्यपूर्ण र आवश्यकतामा आधारित बनाइनेछ।

१८३. सरकारी अस्पताल र स्वास्थ्य संस्थाहरूबाट निःशुल्क प्रदान गरिने औषधिको गुणस्तरीयता र नियमित आपूर्तिमा ध्यान दिइनेछ। औषधिको नमूना परीक्षण, गुणस्तर र मूल्यको अनुगमनलाई प्रभावकारी बनाउन अन्तर्राष्ट्रियस्तरको प्रयोगशाला सहित औषधि व्यवस्था विभागको पुनर्संरचना गरिनेछ।

१८४. काठमाडौं उपत्यकामा रहेका केन्द्रीय अस्पतालहरूमा परेको चापलाई व्यवस्थित गर्न र स्वास्थ्य सेवाको गुणस्तर अभिवृद्धि गर्न उपत्यकाका केही स्थानबाट स्याटेलाइट अस्पतालको सेवा उपलब्ध गराउन शुरु गरिनेछ। सबै सरकारी

अस्पतालहरूमा आइसीयु र एनआइसीयु सेवा क्रमशः विस्तार गरिनेछ। क्षेत्रीयस्तरमा सञ्चालनमा रहेका स्वास्थ्य प्रयोगशालाहरूको क्षमता वृद्धि गरी परीक्षणका लागि आवश्यक यन्त्र उपकरण, जनशक्ति र पूर्वाधार पुऱ्याइनेछ।

१८५. सन् २०१७ भित्र नेपाललाई पूर्ण खोप सेवा पाएको देश घोषणा गर्ने गरी स्थानीय स्वामित्व र सहभागितामा शतप्रतिशत बालबालिकालाई खोप सेवा उपलब्ध गराइनेछ।

१८६. विपद् तथा दुर्घटनाबाट घाइतेको तत्काल उपचारको व्यवस्था गर्न भरतपुर अस्पताल, चितवनमा मदन भण्डारी ट्रमा सेण्टर र धौलागिरी अञ्चल अस्पताल, बाग्लुङ्गमा हरि खड्का ट्रमा सेण्टर स्थापना गरिनेछ। पश्चिमाञ्चल विकास क्षेत्रमा स्वास्थ्य विज्ञान प्रतिष्ठान स्थापना गर्न र राप्ती उप क्षेत्रीय अस्पताललाई मेडिकल कलेजको रुपमा विकास गर्न प्रारम्भिक कार्य शुरु गरिनेछ।

१८७. भेरी अञ्चल अस्पताललाई स्तरोन्नति गरी सुविधासम्पन्न बनाउनुका साथै हृदयरोग निवारण केन्द्र स्थापना गरिनेछ। सरकारी स्तरमा न्युरोलोजी केन्द्र स्थापना गर्न प्रारम्भिक कार्य गरिनेछ। सर्पदंशका बिरामीहरूका लागि एन्टी भेनम भ्याक्सिन उत्पादन गर्न शुरु गरिनेछ।

१८८. योगमाया महिला सशक्तिकरण कार्यक्रम अन्तरगत महिलामाथि हुने सबै प्रकारका लैङ्गिक हिंसाको अन्त्य गरी आर्थिक तथा सामाजिक रुपले पछाडि परेका, विपन्न, एकल, लैङ्गिक हिंसाबाट प्रभावित, प्राकृतिक विपत्तिमा परेका र जोखिममा रहेका महिला तथा किशोरीहरू लक्षित कार्यक्रमहरू सञ्चालन गरिनेछ।

१८९. सडक बालबालिकाको उद्धार, संरक्षण तथा व्यवस्थापनको कार्यलाई अझ प्रभावकारी बनाइनेछ। काठमाडौं उपत्यकालाई सडक बालबालिका मुक्त क्षेत्र बनाइनेछ। हराएका बालबालिकाको खोजी र जोखिममा रहेका बालबालिकाको उद्धार, राहत तथा पुनर्स्थापना कार्यलाई बजेट विनियोजन गरेको छु।

१९०. अपाङ्गता भएका व्यक्तिहरूलाई फरक प्रकृतिको सीप तथा व्यावसायिक तालीम प्रदान गरिनेछ। पूर्ण अशक्त, बेसहारा र विपन्न वर्गका अपाङ्गता भएका व्यक्तिहरूको दीर्घकालीन पुनर्स्थापना कार्यलाई विस्तार गर्दै लगिनेछ। सरकारी तथा सार्वजनिक कार्यालय भवन र सार्वजनिक सवारी साधनहरूलाई क्रमशः अपाङ्गमैत्री बनाउँदै बेसहारा भएका ज्येष्ठ नागरिकहरूलाई संरक्षणको उचित व्यवस्था गरिनेछ। विभिन्न

ठाउँमा सञ्चालित जेष्ठ नागरिक आश्रयस्थलको सुदृढिकरण गरी मनोरञ्जनका साधनसहित सुविधा सम्पन्न तुल्याइनेछ।

<u>युवा तथा खेलकुद</u>

१९१. युवाहरूलाई देश विकासका विभिन्न क्रियाकलापमा अभियानका रुपमा सहभागी गराइनेछ। मुलुक र राज्य प्रणालीप्रति जिम्मेवार र आस्थावान् नागरिक निर्माणका लागि विद्यालय तहको पाठ्यक्रममा र समुदायका क्रियाकलापमा नागरिक शिक्षा अनिवार्य गरिनेछ। नेपाल स्काउटका क्रियाकलापहरूलाई प्रभावकारी बनाउन विद्यालयस्तरमा नै स्काउटका विभिन्न तालीम कार्यक्रमहरू सञ्चालन गरी स्काउटरहरूको संख्यामा उल्लेखनीय वृद्धि गरिनेछ।

१९२. युवालाई अनुशासित, मर्यादित मुलुकप्रति समर्पित र राज्यका संस्थाहरू प्रति सम्मान गर्ने संस्कारयुक्त नागरिकको रुपमा विकास गर्न राष्ट्रिय सेवा दलमा आबद्ध गरी प्रशिक्षित गर्ने कार्यक्रम बढाउँदै लगिनेछ। आगामी आर्थिक वर्षमा केन्द्रीय र क्षेत्रीय स्तरमा २ हजार युवालाई यस्तो तालीम उपलब्ध गराइनेछ।

१९३. अन्तर्राष्ट्रिय खेलमा उत्कृष्ट प्रदर्शन गर्ने खेलाडीहरूलाई प्रोत्साहन गर्ने नीतिलाई निरन्तरता दिएको छु। खेलाडीको बीमा गर्ने व्यवस्था गरिएको छ। स्तरीय खेल प्रशिक्षण र अभ्यासका लागि मुख्य सहरहरूमा कभर्ड हल निर्माण गर्ने कार्यलाई निरन्तरता दिइनेछ। खेलकुदको सन्तुलित विकासका लागि एक निर्वाचन क्षेत्र एक खेल मैदान निर्माण कार्यक्रमलाई निरन्तरता दिइएको छ।

१९४. क्रिकेट खेलमा नेपालले प्राप्त गरेको सफलता र यस खेलमा नेपाली युवाको बढ्दो आकर्षणलाई कायम राख्न काठमाडौं बाहिरका मुख्य सहरहरूमा क्रिकेट मैदान निर्माण गरिनेछ। धनगढीमा अन्तर्राष्ट्रिय स्तरको क्रिकेट मैदान निर्माण कार्यको थालनी गरिनेछ। देशका विभिन्न स्थानमा क्रिकेट मैदानहरू निर्माण गर्न रू. २१ करोड छुट्याएको छु।

१९५. आगामी आर्थिक वर्षमा सातौं राष्ट्रिय खेलकुद प्रतियोगिता आयोजना गरिनेछ। दक्षिण एशियाली खेलकुदमा स्तरीय प्रदर्शन गर्ने गरी सहभागिताका लागि बजेट विनियोजन गरेको छु।

१९६. विद्यालयस्तरदेखि नै खेलकुदको विकासका लागि ४ हजार सामुदायिक विद्यालयहरूका लागि रू. १० हजारका दरले खेल सामाग्री उपलब्ध गराउन बजेट

विनियोजन गरेको छु। खेलकुद क्षेत्रको समग्र विकासका लागि रू. २ अर्ब ७ करोड छुट्याएको छु।

**<u>साहित्य, कला र संस्कृति</u>**

१९७. नेपाली साहित्य, कला, नाट्य, संगीत, भाषा सम्बन्धी क्षेत्रको प्रवर्द्धन र संरक्षण गर्न तत् सम्बन्धी प्रज्ञा प्रतिष्ठानहरूलाई सक्षम र सुदृढ बनाइनेछ।

१९८. मूर्त र अमूर्त संस्कृतिको संरक्षण सम्वर्द्धन र यसको जीवन उपयोगिताको व्यवहारिक पक्षलाई उजागर गर्दै सम्बन्धित समुदायको सक्रिय सहभागितामा संस्कृति संरक्षण र प्रवर्द्धनको पुनर्जागरण वर्षको रुपमा अभियान चलाई सांस्कृतिक, ऐतिहासिक र पुरातात्विक सम्पदाहरूको संरक्षण एवं दीगो व्यवस्थापन गरिनेछ ।

**<u>वित्तीय क्षेत्र</u>**

१९९. वित्तीय क्षेत्र विकास रणनीति आगामी आर्थिक वर्षदेखि कार्यान्वयनमा ल्याइनेछ। पूँजी बजारको संस्थागत विकासका लागि दोस्रो बजार व्यवस्थित गर्न नागरिक लगानी कोषलाई क्रियाशील बनाइनेछ।

२००. बैङ्क तथा वित्तीय संस्थाहरूको मर्जर तथा एक्विजिसन नीतिलाई निरन्तरता दिंदै बीमा कम्पनीहरूलाई समेत एक अर्कामा गाभिन प्रोत्साहित गरिनेछ।

२०१. बचत तथा ऋण सहकारी संस्थाहरूका साथै लघुवित्त कारोबार गर्ने संस्थाहरूको नियमन तथा सुपरीवेक्षणका लागि संस्थागत व्यवस्था आगामी आर्थिक वर्षभित्रै स्थापना गर्न कानुनी तथा नीतिगत व्यवस्था गरिनेछ। बैङ्क तथा वित्तीय संस्थाहरूबाट हुने सबै प्रकारका बैङ्किङ्ग कारोबारलाई पारदर्शी हुने प्रणालीको विकास गरी लागु गरिनेछ। शाखारहित बैङ्किङ्ग र मोबाइल बैङ्किङ्गको सेवा विस्तार गरी वित्तीय पहुँच अभिवृद्धि गरिनेछ।

२०२. बैङ्क तथा वित्तीय संस्थाहरूको कारोबार लागत घटाउन रू. ५ लाख भन्दा बढीको राजस्व अनिवार्य रुपमा चेक मार्फत् बुझाउनुपर्ने व्यवस्था गरिनेछ। नगदमा गरिने कारोबारको सीमा निर्धारण गरिनेछ। विदेशी विनिमय नियमित गर्ने ऐन र विदेशमा लगानी गर्न प्रतिबन्ध लगाउने सम्बन्धी ऐन संशोधन गरिनेछ।

२०३. ग्रामीण स्वालम्बन कोष, युवा स्वरोजगार कोष र अन्य लघु वित्त संस्थाहरूबाट उपलब्ध गराउँदै आइएको कर्जा सुविधामा दोहोरोपना हटाउन एक आपसमा गाभ्नुका साथै अन्य नीतिगत र संस्थागत वैकल्पिक व्यवस्था गरिनेछ।

## सार्वजनिक संस्थान सुधार

२०४. राष्ट्रिय ध्वजावाहक नेपाल वायुसेवा निगममा थप जहाजहरू ल्याउने प्रक्रिया शुरु गरिनेछ। नेपाल वायुसेवा निगममा हवाई उड्डयनको क्षेत्रमा अनुभव प्राप्त अन्तर्राष्ट्रिय विमान कम्पनीलाई रणनीतिक साझेदारको रुपमा भित्र्याउने प्रक्रिया प्रारम्भ गरिनेछ।

२०५. सरकारले सञ्चालन गर्न आवश्यक नभएका, कमजोर वित्तीय र भौतिक अवस्था भएका र कर्मचारीको तलबभत्ता वितरण गर्न समेत सरकारसँग ऋण लिनुपर्ने अवस्थामा पुगेका सार्वजनिक संस्थानका कर्मचारीहरूलाई नियमानुसार पाउने सुविधा दिएर अवकाश दिइनेछ। सार्वजनिक संस्थानहरूको समग्र विश्लेषण गरी सञ्चालन विधि र बन्द भइसकेका संस्थानहरूको भविष्यका बारेमा निक्यौंल गर्न सम्बन्धित क्षेत्रका विज्ञ समेत समेतको सेवा लिइनेछ।

## सुरक्षा र कारागार व्यवस्थापन

२०६. समाजका हरेक क्षेत्रमा न्यायपूर्ण व्यवस्था कायम गर्दै नेपाली नागरिकले आफ्नो हक अधिकारको निर्वाध उपयोग गर्न सक्ने वातावरण निर्माण गरिनेछ। जनतालाई सुशासनको अनुभूति दिलाउन सार्वजनिक निकायहरुमा पारदर्शिता, जवाफदेहिता र उत्तरदायित्व प्रवर्द्धन गर्नुका साथै दण्डहीनताको अन्त्य गर्न कानुनको प्रभावकारी कार्यान्वयन गरिनेछ। समाजमा शान्ति सुव्यवस्था खलबल्याउने, लुटपाट, गुण्डागर्दी, चन्दा, चिट्टा, ढुकुटी जस्ता आपराधिक प्रकृतिका क्रियाकलापहरु नियन्त्रण गर्न सुरक्षा निकायहरुलाई प्रभावकारी रुपमा परिचालन गरिनेछ।

२०७. महानगरीय प्रहरीलाई साधन स्रोत उपलब्ध गराई व्यावसायिक प्रहरी सङ्गठनको रुपमा विकसित गर्दै लगिनेछ। प्रहरीको एकल प्रयासबाट मात्र अपराध रोकथाम र अपराध अनुसन्धान प्रभावकारी नहुने भएकोले **"प्रहरी मेरो साथी"** कार्यक्रम अन्तर्गत युवा स्वयंसेवक परिचालन गर्ने व्यवस्था मिलाइनेछ।

२०८. प्रहरीको अनुसन्धान क्षमता अभिवृद्धि गर्न केन्द्रीय फोरेन्सिक ल्याबको स्तरोन्नति गर्नुका साथै क्षेत्रीय स्तरमा समेत क्रमशः विस्तार गरिनेछ। प्रहरीको अनुसन्धान क्षमता बढाउन रू. १६ करोड विनियोजन गरेको छु। नेपाल प्रहरी र सशस्त्र प्रहरीका लागि रू. ३८ अर्ब ३६ करोड छुट्याएको छु।

२०९. नेपाली सेनालाई पेशागत रुपमा दक्ष र सक्षम एवं अन्तर्राष्ट्रिय स्तरको क्षमता र प्रविधियुक्त बनाउँदै लगिनेछ। नेपाली सेनामा सबै प्रकारको विपद् व्यवस्थापन गर्न सक्षम एउटा विशेष कार्यदलको निर्माण गरिनेछ। यसका लागि आवश्यक सीप र दक्षता अभिवृद्धिमा जोड दिइनेछ। दुर्गम क्षेत्रको सडक निर्माणमा सेनाको उपयोगलाई निरन्तरता दिइनेछ। आगामी आर्थिक वर्षमा नेपाली सेनाका लागि रू. ३२ अर्ब ६९ करोड विनियोजन गरेको छु।

२१०. नुवाकोटमा उच्च क्षमताको कारागार निर्माण गरी काठमाडौंमा रहेको केन्द्रीय कारागारलाई स्थानान्तरण गर्ने कार्यको शुरुवात गर्न रू. ५ करोड विनियोजन गरेको छु। बाँकेमा क्षेत्रीयस्तरको खुल्ला कारागार निर्माण गरिनेछ। काठमाडौं उपत्यकामा रहेका अन्य कारागारहरूलाई क्रमशः उपत्यका बाहिर स्थानान्तरण गर्दै लगिनेछ।

<u>श्रम तथा रोजगार</u>

२११. नेपालको श्रमबजारमा आवश्यक पर्ने विदेशी श्रमशक्तिको विषयमा तीन महिना भित्र अध्ययन गरिनेछ। यस अध्ययनको निष्कर्षको आधारमा उपयुक्त नीति तय गरी प्रभावकारी नियमन गरिनेछ। विदेशी नागरिकलाई नेपालमा काम गर्न श्रम स्वीकृति लिनुपर्ने व्यवस्थालाई अनिवार्य गरी यसको अभिलेख अद्यावधिक बनाइनेछ।

२१२. बालश्रम विरुद्धको अन्तर्राष्ट्रिय प्रतिवद्धता कार्यान्वयन गर्दै यसको अनुगमन र उद्धार कार्यलाई प्राथमिकता दिइनेछ। उद्धार गरिएका बालश्रमिकहरूलाई सरकारी तथा सामुदायिक स्थानीय आवासीय विद्यालयहरूबाट शिक्षा दिलाउन आवश्यक बजेट व्यवस्था गरेको छु।

२१३. व्यावसायिक तथा सीप विकास तालीम केन्द्रलाई श्रमप्रधान कामका लागि आधारभूत तालीम केन्द्रको रुपमा विकास गरिनेछ। यसलाई परियोजना स्वरुपबाट श्रम तथा रोजगार मन्त्रालयको स्थायी सङ्गठन संरचनामा लगिनेछ। मुक्त कमैया, हलिया, कमलरी लगायतका पिछडिएका विभिन्न क्षेत्र र वर्गका युवाहरूलाई लक्षित गरी स्वरोजगारका लागि अभिप्रेरित गर्न विभिन्न विषयका सीपमूलक तालीमहरू सञ्चालन गरिनेछ।

२१४. विदेशमा काम गर्ने नेपालीको हक अधिकार र जीउ ज्यानको संरक्षण एवं विपदमा परेका नेपाली कामदारहरूलाई सहयोग र उद्धार गर्न विदेशस्थित नेपाली नियोगहरूको क्षमता विस्तार गर्नुका साथै गैर आवासीय नेपाली संघ र नेपाली डायस्पोरालाई समेत सक्रिय रुपमा परिचालन गरिनेछ।

२१५. नेपाली श्रमिकहरू कार्यरत श्रम सम्झौता गर्न बाँकी रहेका मुलुकहरूसँग श्रम सम्झौता गर्न सघन कूटनीतिक पहल गरिनेछ।

## परराष्ट्र सम्बन्ध

२१६. आगामी आर्थिक वर्षभित्र सबै हस्तलिखित राहदानीलाई मेशीन रिडेबल राहदानीले प्रतिस्थापन गर्नुका साथै ई-पासपोर्टको शुरुवात गरिनेछ। अध्यागमन सम्बन्धी प्रक्रियालाई सरल र स्वचालित गरिनेछ। आगामी आर्थिक वर्षबाट विद्युतीय प्रवेशाज्ञा प्रणालीको थालनी गरिनेछ।

२१७. विदेश स्थित नेपाली नियोगहरूलाई वैदेशिक लगानी पर्यटन निर्यात व्यापार प्रवर्द्धनमा योगदान पुर्‍याउने गरी आर्थिक कूटनीति परिचालन गर्न सक्षम तुल्याइनेछ।

२१८. नेपाली नियोगहरूका लागि आवश्यक घर तथा जमीन खरिद कार्यलाई प्राथमिकतामा राखिएको छ। यस कार्यका लागि रू. २ अर्ब विनियोजन गरेको छु।

## सूचना तथा सञ्चार

२१९. नेपाली नागिरकको सुसूचित हुने मौलिक हकको सुनिश्चितता र सूचनाको हकको कार्यान्वयनका लागि राष्ट्रिय सूचना आयोगको क्षमता अभिवृद्धि गरिनेछ।

२२०. राष्ट्रिय समाचार समितिलाई सार्वजनिक निजी साझेदारी अवधारणा अनुरुप सञ्चालन गर्न कानूनी र संरचनागत आधार तयार गरिनेछ। रेडियो नेपाल र नेपाल टेलिभिजनलाई गाभेर सार्वजनिक सेवा प्रसारक संस्थाका रुपमा स्थापना गरी सञ्चालन गर्न आवश्यक कानूनी र संस्थागत संरचना तयार गरिनेछ।

२२१. नेपाली पत्रकारहरूको सङ्गठनको पहिलो सभापति एवं पूर्व प्रधानमन्त्री कृष्णप्रसाद भट्टराईको सम्मानमा कृष्णप्रसाद भट्टराई आम सञ्चार प्रतिष्ठान स्थापना गरिनेछ।

२२२. हालैको भूकम्पको समयमा सूचना सम्प्रेषणमा सञ्चार माध्यमले पुर्‍याएको योगदान समेतको कदर गर्दै सञ्चार गृह र विद्युतीय सञ्चार माध्यमहरूको आगामी वर्षको रोयल्टी दस्तूरमा ५० प्रतिशत छुट दिनुका साथै नवीकरण शुल्क पूरै मिनाहा गरेको छु।

२२३. हुलाक सेवा विभागको वर्तमान कार्य र सङ्गठनको पुनर्संरचना गरी यसलाई समय सापेक्ष एवं व्यावसायिक संस्थाको रुपमा विकास गरी स्थानीय तहमा केन्द्र सरकारको सेवा वितरण आधार निकायको रुपमा विकास गर्दै लगिनेछ।

२२४. ग्रामीण दूरसञ्चार विकास कोषको रकम उपयोग गरी मध्य पहाडी लोकमार्गमा अप्टिकल फाइबर बिछ्याई स्मार्ट सिटी निर्माण कार्यको थालनी गरिनेछ। ग्रामीण सूचना केन्द्रहरू स्थापना गर्ने कार्यलाई निरन्तरता दिईनेछ।

२२५. नेपाली चलचित्रको विकासलाई प्रोत्साहन गर्न आधुनिक सुविधायुक्त चलचित्र नगरी निर्माण कार्यलाई निरन्तरता दिईने छ। नेपालको भौगोलिक विविधता र हिमालयको अनुपम सौन्दर्यलाई अन्तर्राष्ट्रिय चलचित्रको छायाङ्कनकालागि प्रोत्साहन गरिनेछ।

**<u>सार्वजनिक प्रशासन</u>**

२२६. मुलुक संघीयतामा रुपान्तरण हुँदा सार्वजनिक प्रशासनका सबै सेवाहरूलाई संघ र प्रदेशको संरचनामा विस्तार र स्थानान्तरण गर्न विशेषज्ञता, छनोट र अवसर समेतलाई व्यवस्थापन गर्न आवश्यक गृहकार्य गरिनेछ।

२२७. आगामी आर्थिक वर्ष प्रारम्भ भएपछि नियुक्ति भई उपदान वा निवृत्तिभरणको सुविधा प्राप्त गर्ने सबै सार्वजनिक पदाधिकारी र कर्मचारीका लागि योगदानमा आधारित निवृत्तिभरण प्रणाली लागु गरिनेछ। राष्ट्रसेवक कर्मचारीको निवृत्तिभरणको दायित्व निरन्तर बढ्दै गएको र नेपालीको औसत आयु बढ्न गई काम गर्न सक्ने उमेर बढ्दै गएको परिप्रेक्ष्यमा निजामति सेवाबाट निवृत्त हुने उमेर पुनरावलोकन गरिनेछ।

२२८. निजामती कर्मचारीहरूलाई राज्यले उपलब्ध गराउँदै आएका सेवा सुविधाहरूमा राज्यकोषबाट हुने व्यय निरन्तर बढ्दै गएको तर अपेक्षित सुविधा र सामाजिक सुरक्षा दिन नसकिएकोले निजामती कर्मचारीकै योगदानमा आधारित कल्याणकारी कोष स्थापना गरी निजामती कर्मचारीहरूका लागि आवश्यक सामाजिक सुरक्षाका योजनाहरू सञ्चालन गरिनेछ।

२२९. भूकम्पपश्चात् स्रोत परिचालनमा परेको दबाबका कारण अहिलेकै अवस्थामा राष्ट्रसेवकहरूको सुविधा वृद्धि गर्न नसकिएको भएता पनि आगामी दिनहरूमा राष्ट्रसेवकहरूको मनोबल उच्च राख्न तलब सुविधालाई समयानुकूल बनाउँदै लैजाने तर्फ सकारात्मक सोच राखिनेछ।

**<u>शासकीय सुधार तथा बजेट व्यवस्थापन</u>**

२३०. सरकारले घोषणा गरेका कार्यक्रमहरूको कार्यान्वयनको प्रभावकारिता बारे धेरै प्रश्नहरू उठ्ने गरेका छन्। यो जायज चिन्तालाई सम्बोधन गर्न शासकीय पक्षमा

व्यापक सुधार गर्नुपर्नेछ। आगामी वर्ष शासकीय सुधारका सबै अवयवहरूमा सुधार गरी कार्यक्रम कार्यान्वयन र सेवा प्रवाहमा विशेष जोड दिइनेछ।

२३१. भ्रष्टाचार विरुद्धको राष्ट्रिय नीति कार्यान्वयनको अनुगमन तथा भ्रष्टाचार नियन्त्रण सम्बन्धी कार्यक्रमहरू प्रभावकारी एवं समन्वयात्मक ढङ्गमा सञ्चालन गरिनेछ। अख्तियार दुरुपयोग अनुसन्धान आयोग र भ्रष्टाचार नियन्त्रणमा संलग्न अन्य निकायहरूको संस्थागत सुदृढिकरण गर्दै कर्मचारीहरूको क्षमता विकास गरिनेछ। तोकिएको जिम्मेवारी पूरा गर्न उचित र पर्याप्त प्रयास नगर्ने पदाधिकारीहरूको अभिलेख राखी निजलाई वृत्ति विकासका अवसरहरूबाट वञ्चित गर्ने परिपाटीको विकास गरिनेछ।

२३२. सरकारी कार्यालय, सार्वजनिक संस्थान लगायत सबै सार्वजनिक निकायहरूमा प्रशासनिक र उत्पादन खर्च घटाउन सार्वजनिक खर्चमा मितव्ययिता सम्बन्धी नीति तत्कालै तर्जुमा गरी लागु गरिनेछ। नेपाल सरकारका स्थायी संरचनाबाट सम्पादन हुन सक्ने नियमित कार्यहरू तथा विकास आयोजना सञ्चालनका लागि विकास समिति, बोर्ड, प्रतिष्ठान जस्ता अलग्गै स्वायत्त संस्था खडा गरिने छैन।

२३३. सार्वजनिक सेवाको वितरणलाई प्रभावकारी बनाउन आगामी वर्षदेखि राष्ट्रिय परिचयपत्र वितरणको कार्य शुरु गरिनेछ। सेवा वितरण र कार्यसञ्चालनमा सूचना प्रविधिको उपयोग बढाइनेछ। यसका लागि सबै निकायहरूमा आवश्यक बजेट विनियोजन गरेको छु।

२३४. योजना तर्जुमा र कार्यान्वयनका बीच रहेको अन्तर कम गर्दै कार्यान्वयन क्षमता र शैलीमा सुधार गर्न आगामी आर्थिक वर्षलाई **"बजेट कार्यान्वयन वर्ष"** को रुपमा घोषणा गरी कार्यान्वयन क्षमता बढाउने बहुआयामिक प्रयासहरू गरिनेछन्। वार्षिक कार्यक्रम स्वीकृति र अख्तियारी दिने प्रक्रियालाई सरलीकृत गरी आर्थिक वर्षको प्रारम्भदेखि नै कार्यक्रम कार्यान्वयन हुन सक्ने व्यवस्था मिलाएको छु।

२३५. जग्गा प्राप्ति र क्षतिपूर्ति सम्बन्धी समस्या सम्बोधन गर्न प्रभावकारी प्रशासकीय उपायहरूको अवलम्बन गरिनेछ। प्रचलित कानुनहरूमा सुधार गरी ठूला आयोजनाहरूमा जग्गा प्राप्ति तथा क्षतिपूर्तिका विषयहरूमा छिटो निर्णय गर्नसक्ने निष्पक्ष संयन्त्रको व्यवस्था गरिनेछ। विकास र वातावरणलाई एक अर्काको प्रतिद्वन्दी नभई परिपूरकको रुपमा अघि बढाइनेछ। आयोजनाहरूको वातावरणीय मूल्याङ्कन प्रक्रियालाई थप सरल बनाइनेछ।

२३६. आयोजना कार्यान्वयन तहमा आवश्यक पर्ने निर्माण सामाग्रीको उपलब्धता र गुणस्तरमा विशेष ध्यान दिइनेछ। पुनर्निर्माण र अन्य निर्माणका लागि निर्माण सामग्रीको आपूर्ति सुनिश्चित गर्न हाल सञ्चालनमा रहेका क्रसर उद्योगहरूलाई निश्चित वातावरणीय मापदण्ड पूरा गर्ने गरी एक वर्ष पश्चात् तोकिएका स्थानमा स्थानान्तरण गर्नैपर्ने शर्तमा यथावत् सञ्चालन गर्न दिइनेछ। ठूला निर्माण कार्यहरूको गुणस्तर राष्ट्रिय सतर्कता केन्द्रबाट परीक्षण गर्ने व्यवस्था मिलाइनेछ। तोकिएको गुणस्तर नभएमा निर्माण व्यवसायी तथा सम्बन्धित प्राविधिकलाई जिम्मेवार बनाइनेछ।

२३७. राष्ट्रिय गौरवका र प्राथमिकता प्राप्त वृहत् आयोजनाहरूमा आवश्यक उच्च स्तरको व्यवस्थापकीय र प्राविधिक कौशलयुक्त जनशक्ति सरकारी निकाय र निजी क्षेत्रबाट समेत प्रतिस्पर्धाको आधारमा आयोजना अवधिभरको लागि चयन गरी कार्यसम्पादनका आधारमा प्रतिस्पर्धी पारिश्रमिक प्रदान गर्ने नीति लिइनेछ। यसबाट विदेशमा रहेका नेपाली विशेषज्ञहरू समेतलाई स्वदेश फर्की विकास निर्माणमा सहभागी हुने सम्मानजनक अवसर प्राप्त हुनेछ भन्ने अपेक्षा गरेको छु। विकास निर्माणमा इञ्जिनीयरिङ दक्षता अभिवृद्धि गर्न राष्ट्रिय स्तरको इञ्जिनीयरिङ तालीम प्रतिष्ठान स्थापना गरिनेछ।

२३८. कर्मचारीको कार्यसम्पादनस्तरलाई उसको समग्र मूल्याङ्कनसँग आबद्ध गर्ने गरी हालको मूल्याङ्कन प्रणालीमा परिमार्जन गरिनेछ र निजहरूको सेवा सुविधालाई कार्यसम्पादनसँग आबद्ध गर्दै पुरस्कार र दण्डको समेत व्यवस्था गरिनेछ। प्राथमिकता प्राप्त आयोजनाहरूमा काम गर्ने आयोजना प्रमुख, लेखा प्रमुख र अन्य जिम्मेवार कर्मचारीहरूलाई निजको कार्यसम्पादनस्तर ८० प्रतिशत भन्दा माथि रहेमा आयोजना अवधिभर सरुवा नगर्ने व्यवस्था मिलाइनेछ।

२३९. दोस्रो चौमासिक अवधिसम्म पनि कार्य शुरु नगर्ने वा सो अवधिसम्मको लक्ष्यको ५० प्रतिशतभन्दा कम प्रगति गर्ने कार्यक्रम तथा आयोजनाहरूलाई अर्थ मन्त्रालयमा बजेट समर्पण गर्न लगाउने व्यवस्था गरेको छु। यसरी समर्पण गरिएको बजेट काम हुने देखिएका अन्य आयोजना तथा कार्यक्रममा रकमान्तर गरिनेछ।

२४०. विस्तृत सम्भाव्यता अध्ययन नभएका र आयोजना कार्यान्वयन पूर्वका चरणहरू पूरा नभएका आयोजनाहरूको निर्माण कार्य शुरु गरिनेछैन। स्वीकृत बजेट तथा कार्यक्रमहरू पूरा नभई तत् तत् निकायलाई अर्को नयाँ कार्यक्रमका लागि बजेट निकासा गरिने छैन। आर्थिक वर्षको मध्यमा आएर आयोजना स्वीकृत गर्ने र

अन्त्यतिर आएर यस्ता नयाँ कार्यक्रमका लागि बजेट माग तथा निकासा गर्ने परम्परा यसै बजेटबाट अन्त्य गरेको छु। विकास आयोजनाहरूको अध्ययन र अनुसन्धान गरी आयोजना विकास गर्नका लागि छुट्टै बजेट विनियोजन गरेको छु।

२४१. विद्यमान सार्वजनिक खरिद सम्बन्धी कानुनहरूमा भरखरै भएको सुधारले खरिद प्रक्रिया धेरै सरल हुन गएको छ। सम्बद्ध अन्य कानुनहरूमा सुधार गरी कार्यान्वयन अनुकूल बनाइनेछ।

**सम्माननीय समामुख महोदय,**

अब म माथिका क्षेत्रगत नीति तथा कार्यक्रमहरू कार्यान्वयनका लागि बजेट विनियोजन र स्रोतको व्यवस्थाको योजना प्रस्तुत गर्दछु:-

२४२. आगामी आर्थिक वर्षका नीति तथा कार्यक्रमहरू कार्यान्वयन गर्न रू. ८ खर्ब १९ अर्ब ४६ करोड ८८ लाख ८४ हजार विनियोजन गरेको छु। कुल विनियोजनमध्ये चालुतर्फ रू. ४ खर्ब ८४ अर्ब २६ करोड ६३ लाख ७५ हजार अर्थात् ५९.१ प्रतिशत, पूँजीगततर्फ रू. २ खर्ब ८ अर्ब ८७ करोड ७२ लाख ४२ हजार अर्थात् २५.५ प्रतिशत र वित्तीय व्यवस्थातर्फ रू. १ खर्ब २६ अर्ब ३२ करोड ५२ लाख ६७ हजार अर्थात् १५.४ प्रतिशत रहेको छ। यो खर्च अनुमान चालु आर्थिक वर्षको विनियोजनको तुलनामा ३२.६ प्रतिशत र संशोधित अनुमानको तुलनामा ५६.८ प्रतिशतले बढी हो।

२४३. आगामी आर्थिक वर्षका लागि अनुमान गरिएको खर्च व्यहोर्ने स्रोत मध्ये राजस्वबाट रू. ४ खर्ब ७५ अर्ब १ करोड २१ लाख, सावाँ फिर्ता प्राप्तिबाट रू. २ अर्ब र वैदेशिक अनुदानबाट रू. १ खर्ब १० अर्ब ९२ करोड ९४ लाख ७ हजार व्यहोर्दा रू. २ खर्ब ३१ अर्ब ५२ करोड ७३ लाख ७७ हजार न्यून हुनेछ। सो न्यून पूर्ति गर्न वैदेशिक ऋणबाट रू. ९४ अर्ब ९६ करोड ४७ लाख ४ हजार जुटाइनेछ। राजस्व परिचालन र वैदेशिक सहायता परिचालन गर्दा खूद रू. १ खर्ब ३६ अर्ब ५६ करोड २६ लाख ७३ हजार न्यून हुन जानेछ। सो न्यून पूर्ति गर्न रू. ८८ अर्ब आन्तरिक ऋणबाट र रू. ४८ अर्ब ५६ करोड २६ लाख ७३ हजार चालु वर्षको नगद मौज्दातबाट व्यहोरिनेछ।

अब म आर्थिक वर्ष २०७२/७३ को राजस्व परिचालन सम्बन्धी नीति तथा कार्यक्रम प्रस्तुत गर्दछु।

२४४. विगत वर्षमा कर प्रणालीमा गरिएका श्रृंखलाबद्ध सुधारले आर्थिक क्रियाकलापको विस्तार एवं अर्थतन्त्रको सुदृढिकरण भई करको आधार र दायरा फराकिलो हुँदै गएको छ। विनाशकारी भूकम्पपछिको पुनर्स्थापना र पुनर्निर्माणका लागि ठूलो स्रोतको आवश्यकता छ। तथापि सरकार करका दरहरूमा वृद्धि नगरी निजी क्षेत्रलाई सक्रिय एवं स्वतःस्फूर्त रुपमा सहभागी गराई कर कानुनको पूर्ण कार्यान्वयन गर्दै राजस्व सङ्कलन वृद्धि गर्न चाहन्छ। हालको विषम परिस्थितिमा पनि लगानी र आर्थिक वृद्धिलाई अझ उत्प्रेरित गर्न विगत वर्षहरूमा प्रदान गरिएका सुविधाहरू कटौती नगरी बढोत्तरी गरेको छु। आगामी आर्थिक वर्षमा राजस्व परिचालनका नीतिहरू देहाय बमोजिम रहनेछन्ः-

- लगानीको वातावरण अनुकूल बनाई आर्थिक क्रियाकलाप बढाउने,
- भूकम्पबाट प्रभावित भएको अर्थतन्त्र र व्यवसायलाई पुनरुत्थान गर्ने,
- स्वेच्छिक कर सहभागिता प्रवर्द्धन गर्ने,
- निर्यात प्रवर्द्धन र आयात प्रतिस्थापन गर्ने,
- अवैध व्यापार नियन्त्रण तथा विदेशी मुद्रा अपचलन रोक्ने र
- सम्पत्ति शुद्धीकरण निवारण गर्ने।

२४५. उल्लिखित राजस्व नीतिहरू कार्यान्वयन गर्न देहाय बमोजिमका रणनीति तथा कार्यक्रमहरू कार्यान्वयनमा ल्याइनेछन्ः-

<u>कर प्रणाली सुधार र दायरा विस्तार</u>

- राजस्व सम्बन्धी विभिन्न ऐन नियममा भएका व्यवस्थालाई एकीकृत गरी कर संहिता (Tax Code) निर्माण गरिनेछ।
- उच्चस्तरीय कर प्रणाली पुनरावलोकन आयोगले दिएका कर सुधार सम्बन्धी सुझावहरू प्राथमिकताका आधारमा आगामी आर्थिक वर्षदेखि नै कार्यान्वयनमा लगिनेछ।
- मूल्य अभिवृद्धि कर लागु भएदेखि हालसम्म पुनरावलोकन नभएको मूल्य अभिवृद्धि कर दर्ताको लागि तोकिएको कारोबारको सीमा रू. २० लाखबाट वृद्धि गरी रू. ५० लाख कायम गरिएको छ। यसका साथै कारोबारको

सीमाभन्दा तल रहेर कारोबार गर्ने करदाताका लागि कारोबारमा आधारित कर लगाउने व्यवस्था मिलाएको छ।

- वार्षिक ४० लाख रुपैयाँभन्दा बढी आय गर्ने प्राकृतिक व्यक्तिले आर्थिक वर्ष २०७२/७३ देखि अनिवार्य रुपमा आय विवरण पेश गर्नुपर्ने व्यवस्था मिलाएको छ।
- कर सम्बन्धी विवाद शीघ्र समाधान गरी कर बक्यौता व्यवस्थापन गर्न स्थायी प्रकृतिको विवाद निरुपण संयन्त्र गठन सम्बन्धमा अध्ययन गरिनेछ।
- एकीकृत विद्युतीय कर प्रणालीको माध्यमबाट प्रक्रियागत सरलीकरण र कर सहभागिता एवं कर सङ्कलन लागत घटाइनेछ। साथै राजस्व जोखिमको क्षेत्रगत सूचकको आधार तयार गरी आर्थिक अपराध र राजस्व चुहावटलाई नियन्त्रण गरिनेछ।
- आगामी आर्थिक वर्षदेखि चुरोट उत्पादनमा स्वयं निष्काशन प्रणाली लागू गरिनेछ।
- चुरोट, बीयर र मदिरा लगायतका अन्तःशुल्क लाग्ने केही वस्तुमा लाग्दै आएको अन्तःशुल्क दरमा सामान्य वृद्धि गरेको छ।
- भन्सार जाँचपास प्रयोजनका लागि मालवस्तुको घोषणा, मूल्याङ्कन, लगायतका कार्यहरू विद्युतीय माध्यमबाट गर्न आवश्यक व्यवस्था मिलाइनेछ।
- व्यापार सहजिकरण, सामञ्जस्यिकरण तथा समन्वय सहितको भन्सार नियन्त्रण प्रणालीलाई प्रभावकारी बनाउन भन्सार कानुनमा सामयिक सुधारको प्रस्ताव गरेको छ।
- विपद् व्यवस्थापनको अवस्थामा भन्सार जाँचपास प्रक्रिया सरलीकरणका लागि छुट्टै कार्यविधि बनाई कार्यान्वयनमा ल्याइनेछ।
- राजस्व चुहावट सम्बन्धी कानुनमा आवश्यक परिमार्जन गरिनेछ।
- सम्पत्ति शुद्धीकरण निवारण सम्बन्धी राष्ट्रिय कानुनको प्रभावकारी कार्यान्वयन र क्षेत्रीय तथा अन्तर्राष्ट्रिय स्तरमा गरिएका प्रतिबद्धता क्रमशः कार्यान्वयन गर्दै लगिनेछ।

**छुट, सहुलियत एवं निजी क्षेत्रको प्रवर्द्धन**

- विशेष उद्योग र पर्यटनसँग सम्बन्धित उद्योगले आफ्नो सञ्चित मुनाफाबाट उद्योगको क्षमता विस्तारका लागि नाफाको पूँजिकरण गरेमा लाभांश कर नलाग्ने व्यवस्था मिलाएको छु।
- भूकम्पबाट प्रभावित जिल्लामा व्यवसाय पूर्ण रुपमा क्षति भई जिल्ला दैवी प्रकोप उद्धार समितिबाट प्रमाणित भएका पूर्व अनुमानित कर विवरण बुझाउने साना करदाताका लागि चालु आर्थिक वर्षको आयकर, अन्तःशुल्क इजाजत दस्तुर र घर बहाल कर मिन्हा दिने व्यवस्था मिलाएको छु।
- एक सय जनाभन्दा बढी नेपाली नागरिकहरूलाई रोजगारी प्रदान गर्ने विशेष उद्योग र पर्यटन उद्योगलाई लाग्ने आयकरमा थप ३० प्रतिशत आयकर छुट दिने व्यवस्था गरेको छु।
- निर्यात गृह तथा विशेष आर्थिक क्षेत्रमा निर्यात गरेमा खरिदमा तिरेको मूल्य अभिवृद्धि कर फिर्ता दिने व्यवस्था गरेको छु।
- पुनर्निर्माणको लागि आवश्यक पर्ने निर्माण सामाग्री र निर्माण सामाग्रीको कच्चापदार्थ, ईँटा, जस्तापाता, पूर्वनिर्मित घर र सो को कच्चा पदार्थको आयात गर्दा लाग्ने भन्सार महसुल दरमा सहुलियत प्रदान गर्ने व्यवस्था मिलाएको छु। यसका साथै पुनर्निर्माण र कृषि उत्पादकत्व वृद्धिका लागि आवश्यक पर्ने यन्त्र उपकरणको सहज पैठारी गर्ने व्यवस्था मिलाएको छु।
- सार्वजनिक यातायात सञ्चालन गर्ने गरी दर्ता भएका सहकारी तथा कम्पनीले आयात गर्ने ४० र सो भन्दा बढी सीट क्षमता भएका सवारी साधनको आयातमा पाँच प्रतिशत मात्र भन्सार महसुल लिई अन्तःशुल्क र सडक मर्मत तथा सुधार दस्तुर छुट दिने व्यवस्था मिलाएको छु।
- सूर्ती तथा मदिराजन्य बाहेक उत्पादनमूलक उद्योगले उद्योग स्थापना तथा सञ्चालन गर्न आफ्नो नाउँमा खरिद गर्ने जग्गाको लिखत पारित गर्दा लाग्ने रजिष्ट्रेशन दस्तुरमा ५० प्रतिशत छुट हुने व्यवस्था गरेको छु।
- एक हेक्टरभन्दा बढी जग्गामा पोखरी निर्माण गरी माछा पालन गर्ने किसानले माछा र माछाका भुरा ढुवानी गर्ने अक्सिजन प्लाण्ट जडित ढुवानी साधनको आयातमा ५० प्रतिशत भन्सार महसुल छुट दिने व्यवस्था मिलाएको छु।

